॥ श्री गणेशाय नमः ॥
ॐ
श्री परमात्मने नमः
॥ अथ व्यासस्मृतिः ॥

## ॥ प्रथमोऽध्यायः ॥
## (पहिलो अध्याय)
## ॥ अथ धर्माचरणादेशप्रयुक्तवर्णषोडशसंस्कारवर्णनम् ॥
## (धर्माचरण, सोह्र संस्कार आदि)

**वाराणस्यां सुखासीनं वेदव्यासं तपोनिधिम् ।**
**पप्रच्छुर्मुनयोऽभ्येत्य धर्मान्वर्णव्यवस्थितान् ॥१॥**

वाराणसीमा सुखपूर्वक बस्नु भएका वेदव्यासलाई मुनिहरूले
गएर वर्णधर्मका विषयमा प्रश्न गरे ।

**स स्पृष्टः स्मृतिमान्स्मृत्वा स्मृतिं वेदार्थगर्भिताम् ।**
**उवाचाथ प्रसन्नात्मा मुनयः श्रूयतामिति ॥२॥**

त्यसपछि वेदका अर्थलाई गर्भमा धारण गर्ने भएका स्मृतिहरूलाई सम्झँदै मुनिहरूबाट
प्रश्न सोधिएका उनले खुशी हुँदै "हे मुनिजन ! ल सुन्नुहोस्" भन्नु भयो ।

**यत्र यत्र स्वभावेन कृष्णसारो मृगः सदा ।**
**चरते तत्र वेदोक्तो धर्मो भवितुमर्हति ॥३॥**

स्वावाभिकरुपले जहाँ कृष्णसार मृग घुम्दछन् त्यहाँ नै वेदले बताएका धर्म हुन योग्य हुन्छ ।

**श्रुतिस्मृतिपुराणानां विरोधो यत्र दृश्यते ।**
**तत्र श्रौत्रं प्रमाणं तु तयोर्द्वैधे स्मृतिर्वरा ॥४॥**

श्रुति, स्मृति र पुराणमा विरोध देखिने ठाउँमा श्रुति-वचन प्रामाणिक हुन्छ भने
स्मृति र पुराणमा विरोध देखिए स्मृति बढी प्रामाणिक हुन्छ ।

ब्राह्मणक्षत्रियविशस्त्रयो वर्णा द्विजातयः ।
श्रुतिस्मृतिपुराणोक्तधर्मयोग्यास्तु नेतरे ॥५॥

ब्राह्मण, क्षत्रिय र वैश्य-यी तीन जातिलाई द्विज भनिन्छ । श्रुति, स्मृति र पुराणमा वर्णन गरिएका धर्म गर्नयोग्य यी तीन नै हुन्छन्, अरु हुँदैनन् ।

शूद्रो वर्णश्चतुर्थोऽपि वर्णत्वाद्धर्ममर्हति ।
वेदमन्त्रस्वधास्वाहावषट्कारादिभिर्विना ॥६॥

चौथो वर्ण शूद्र पनि चार वर्णभित्र पर्ने हुनाले वेदमन्त्र, स्वधा, स्वाहा र वषट्कार आदिलाई छोडी अरु धर्मको अधिकारी हुन्छ ।

विप्रवद्विप्रविन्नासु क्षत्रविन्नासु क्षत्रवत् ।
जातकर्माणि कुर्वीत ततः शूद्रासु शूद्रवत् ॥७॥

विवाहिता पत्नीहरूबाट जन्मने पुत्रको जातकर्म आदि संस्कार ब्राह्मणीबाट जन्मनेको ब्राह्मणकोझैँ, छेत्रिनीबाट जन्मनेको छेत्रीकोझैँ र शूद्राबाट जन्मनेको शूद्रकोझैँ गर्नू ।

वैश्यासु विप्रक्षत्राभ्यां ततः शूद्रासु शूद्रवत् ।
अधमादुत्तमायान्तु जातः शूद्राधमः स्मृतः ॥८॥

वैश्याबाट ब्राह्मण र छेत्रीले जन्माउने पुत्रको वैश्यकोझैँ र शूद्राबाट जन्माउनेको शूद्रकोझैँ संस्कार गर्नू । निम्न वर्णका पुरुषले उच्च वर्णका स्त्रीबाट जन्माउने पुत्रलाई नीच शूद्र मानिएको छ ।

ब्राह्मण्यां शूद्रजनितश्चण्डालो धर्मवर्जितः ।
कुमारीसम्भवस्त्वेकः सगोत्रायां द्वितीयीकः ॥९॥

शूद्रले ब्राह्मणीबाट जन्माउने पुत्र 'चाण्डाल' हुन्छ र उसलाई धार्मिक कर्ममा अधिकार हुँदैन । चाण्डाल तीन थरी मानिन्छन्- एक कुमारीबाट जन्मने, दोश्रो सगोत्रीबाट जन्मने,...।

ब्राह्मण्यां शूद्रजनितश्चाण्डालस्त्रिविधः स्मृतः ।
वर्द्धकीर्नापितो गोप आशायः कुम्भकारकः ॥१०॥

...र तेश्रो ब्राह्मणीबाट शूद्रले जन्माउने सिकर्मी, नाई, ग्वाला, च्यामे, कुम्हाले,... ।

**बणिक्किरातकायस्थमालाकारकुटुम्बिनः ।**
**वरटो मेद्चण्डालदासश्वपचकोलकाः ॥११॥**

...वणिक्, किरात, कायस्थ, मालाकार, कुटुम्बी, वरट (हाँस पाल्ने), मेद (रक्सी बनाउने), चाण्डाल, दास श्वपच र कोलक...।

**एतेऽन्त्यजाः समाख्याता ये चान्ये च गवाशनाः ।**
**एषां सम्भाषणात्स्नानं दर्शनादर्कवीक्षणम् ॥१२॥**

...तथा जसले गाई खान्छन्-यी सबैलाई अन्त्यज भनिएको छ । अन्त्यजसँग कुराकानी गरे वा यीनलाई देखे सूर्यको दर्शन गर्नू ।

**गर्भाधानं पुंसवनं सीमन्तो जातकर्म च ।**
**नामक्रिया निष्क्रमणेऽन्नाशनं वपनक्रिया ॥१३॥**

गर्भाधान, पुंसवन, सीमन्त, जातकर्म, नामकरण, निष्क्रमण, अन्न-प्राशन,... ।

**कर्णवेधो व्रतादेशो वेदारम्भक्रियाविधिः ।**
**केशान्तः स्नानमुद्वाहो विवाहाग्निपरिग्रहः ॥१४॥**

...मुण्डन, कर्णवेध, उपनयन, वेदारम्भ, केशान्त, स्नान, विवाह, अग्निपरिग्रह ...।

**त्रेताग्निसंग्रहश्चेति संस्काराः षोडश स्मृताः ।**
**नवैताः कर्णवेधान्ता मन्त्रवर्जं क्रियाः स्त्रियाः ॥१५॥**

...र तीन अग्नि (दक्षिण, गार्हपत्य र आहवनीय) ग्रहण-यी सोह्र संस्कार मानिएका छन् । स्त्रीका कर्णवेधसम्म नौ संस्कार बिनामन्त्र हुन्छ ।

**विवाहो मन्त्रतस्तस्याः शूद्रस्यामन्त्रतो दश ।**
**गर्भाधानं प्रथमतस्तृतीये मासि पुंसवः ॥१६॥**

विवाह मन्त्रले गरिन्छ । शूद्रका दश संस्कार बिनामन्त्र हुन्छ । गर्भाधान संस्कार सबैभन्दा पहिले (विवाह पछि प्रथम पटक रजोदर्शन भए पछि) हुन्छ । (गर्भ रहेको) तेश्रो महिनामा पुंसवन संस्कार हुन्छ ।

**सीमन्तश्चाष्टमे मासि जाते जातक्रिया भवेत् ।**
**एकादशेऽह्नि नामार्कस्येक्षा मासि चतुर्थके ॥१७॥**

(गर्भ रहेको) आठौं महिनामा सीमन्तोन्नयन र जन्मेपछि जातकर्म हुन्छ । जन्मेको एघार दिनमा नामकरण र जन्मेको चौथो महिनामा निष्क्रमण (सूर्यदर्शन) संस्कार हुन्छ ।

**षष्ठे मास्यन्नमश्नीयाच्चूडाकर्म कुलोचितम् ।**
**कृतचूडे च बाले च कर्णबिधो विधीयते ॥१८॥**

जन्मेको छैटौं महिनामा अन्नप्राशन र कूलपरम्परा अनुसार चूडाकर्म गर्नू । चूडाकर्म पछि कर्णविध संस्कारको विधान गर्नू ।

**विप्रो गर्भाष्टमे वर्षे क्षत्र एकादशे तथा ।**
**द्वादशे वैश्यजातिस्तु व्रतोपनयनमर्हति ॥१९॥**

गर्भ रहेदेखि आठ वर्षको हुँदा ब्राह्मणको, एघार वर्ष हुँदा क्षत्रियको र बाह्र वर्ष हुँदा वैश्यजातिको उपनयन संस्कार गर्न योग्य हुन्छ ।

**तस्य प्राप्तव्रतस्यायं कालः स्याद्द्विगुणाधिकः ।**
**वेदव्रतच्युतो व्रात्यः स व्रात्यस्तोममर्हति ॥२०॥**

समय बिती दोब्बर समय पुग्दा पनि उपनयन नगरे उ वेद-व्रतबाट पतित भई व्रात्य हुन्छ र उसले व्रात्यस्तोम यज्ञ गर्नू पर्दछ ।

**द्वे जन्मनि द्विजातीनां मातुः स्यात्प्रथमं तयोः ।**
**द्वितीयं छन्दसां मातुर्ग्रहणाद्विधिवद्गुरोः ॥२१॥**

द्विजातीका दुईजन्म हुन्छन्, ती दुई जन्ममा पहिलो जन्म आमाको कोखबाट र दोश्रो जन्म गुरुसँग विधिपूर्वक वेदमाता गायत्रीको ग्रहण गरेर हुन्छ ।

**एवं द्विजातिमापन्नो विमुक्तो वान्यदोषतः ।**
**श्रुतिस्मृतिपुराणानां भवेदध्ययनक्षमः ॥२२॥**

यसरी द्विजता प्राप्त गरी अन्य दोषबाट मुक्त भएको बालक श्रुति, स्मृति र पुराण अध्ययन गर्ने अधिकारी हुन्छ ।

**उपनीतो गुरुकुले वसेन्नित्यं समाहितः ।**
**बिभृयाद्दण्डकौपीनोपवीताजिनमेखलाः ॥२३॥**

उपनयन गरेपछि सावधान भई नित्य गुरुकुलमा बस्नू । दण्ड, लँगौटी, जनै, मृगचर्म र कन्धनी धारण गर्नू ।

**पुण्येऽह्नि गुर्वनुज्ञातः कृतमन्त्राहुतिक्रियः ।**
**स्मृत्वोङ्कारं च गायत्रीमारभेद्वेदमादितः ॥२४॥**

शुभ दिनमा गुरुको अनुमति लिई मन्त्र पढ्दै यज्ञमा होम गरेपछि ॐ र गायत्रीलाई सम्झँदै वेद शुरुबाट पढ्न प्रारम्भ गर्नू ।

**शौचाचारविचारार्थी धर्मशास्त्रमपि द्विजः ।**
**पठेत गुरुतः सम्यक्कर्म तद्दिष्टमाचरेत् ॥२५॥**

ब्रह्मचारी द्विजले शौच र आचार जान्नका लागि गुरुबाट धर्मशास्त्र पनि राम्ररी पढ्नू र सो अनुसारका कर्मको आचरण गर्नू ।

**ततोऽभिवाद्य स्थविरान् गुरुञ्चैव समाश्रयेत् ।**
**स्वाध्यायार्थं तदापन्नः सर्वदा हितमाचरेत् ॥२६॥**

वेदादि पढी नित्य वृद्धलाई अभिवादन गरी गुरुकै आश्रय लिनू । स्वाध्यायका लागि प्रयत्न गर्नू र सधैं गुरुकै भलो चिताउनू ।

**नापक्षिप्तोऽपि भाषेत नो व्रजेत्ताडितोऽपि वा ।**
**विद्वेषमथ पैशुन्यं हिंसनञ्चार्कवीक्षणम् ॥२७॥**

गुरुले हँला गर्दा पनि गुरुसामु नबोल्नू, उनले पिट्दा पनि त्यहाँबाट नहिँड्नू ।
ब्रह्मचारीले द्वेष, अर्काको पोल लगाउने काम, हिंसा, अकारणको सूर्यदर्शन,... ।

**तौर्य्यत्रिकानृतोन्मादपरिवादानलङ्क्रियाम् ।**
**अञ्जनोद्वर्त्तनादर्शस्रग्विलेपनयोषितः ॥२८॥**

...नाच-गान-बजान, झुटो बोल्ने काम, उन्माद, अर्काको निन्दा, अलङ्कार लगाउने, गाजल लगाउने, सुगन्ध दल्ने, ऐना हेर्ने, माला लगाउने, चन्दन आदि दल्ने, स्त्रीसँगको सम्पर्क,... ।

**वृथाटनमसन्तोषं ब्रह्मचारी विवर्जयेत् ।**
**इषच्चलितमध्याह्नेऽनुज्ञातो गुरुणा स्वयम् ॥२९॥**

...व्यर्थको घुमघाम र असन्तोष त्याग्नू । दोपहर केही बितेपछि गुरुको आज्ञालिई ...।

**अलोलुपश्चरेद्भैक्षं व्रतिषूत्तमवृत्तिषु ।**
**सद्यो भिक्षान्नमादाय वित्तवत्तदुपस्पृशेत् ॥३०॥**

...लोभ त्यागेर उत्तम जीवनचर्या भएका व्रतालुले आफैं भिक्षा माग्नू भिक्षान्नलाई
तुरुन्त लिई धनलाईझैं मुसार्नू ।

**कृतमाध्याह्निकोऽश्नीयादनुज्ञातो यथाविधि ।**
**नाद्यादेकान्नमुच्छिष्टं भुक्त्वा चाऽऽचामितामियात् ॥३१॥**

मध्याह्नका कर्म सकेपछि गुरुको आज्ञा लिई विधिपूर्वक त्यो भिक्षान्न खानू । एउटैको अन्न
सधैं नखानू, जुठो नखानू र खाइसके पछि आचमन गर्नू ।

**नान्यद्भिक्षितमादद्यदापन्नो द्रविणादिकम् ।**
**अनिन्द्यामन्त्रितः श्राद्धे पैत्र्येऽद्याद्गुरुचोदितः ॥३२॥**

आपत परे पनि अरुले मागेको धन आदि नलिनू । पितृ श्राद्धमा अनिन्दनीय
व्यक्तिले खान बोलाउँदा गुरुको आज्ञा लिई खान जानू ।

**एकान्नमप्यविरोधे व्रतानां प्रथमाश्रमी ।**

**भुक्त्वा गुरुमुपासीत कृत्वा सन्धुक्षणादिकम्॥३३॥**

ब्रह्मचर्य व्रतको विरुद्ध नहुँदा एउटैको अन्न खाएर अग्नि प्रज्वालन आदि कार्यगरी गुरुको सेवा गर्नू ।

**समिधोऽग्नावादधीत ततः परिचरेद्गुरुम् ।**
**शयीत गुर्व्वनुज्ञातः प्रह्वश्च प्रथमं गुरोः ॥३४॥**

अग्निमा समिधा राख्नू । त्यसपछि गुरुको सेवा गर्नू । पहिले गुरुसँग निहुरेर अनुमति लिनू अनि सुत्नू ।

**एवमन्वहमभ्यासी ब्रह्मचारी व्रतञ्चरेत् ।**
**हितोपवादः प्रियवाक्सम्यग्गुर्वर्थसाधकः ॥३५॥**

यसरी प्रतिदिन यी कार्य दोहोऱ्याउँदै ब्रह्मचर्य व्रतको पालना गर्नू । हितकारी वचन बोल्ने, मधुरभाषी र गुरुका कार्य राम्ररी गर्ने हुनू ।

**नित्यमाराधयेदेनमासमाप्तेः श्रुतिग्रहात् ।**
**अनेन विधिनाऽधीतो वेदमन्त्रो द्विजं नयेत्॥३६॥**
**शापानुग्रहसामर्थ्यमृषीणाञ्च सलोकताम् ।**
**पयोऽमृताभ्यां मधुभिः साज्यैः प्रीणन्ति देवताः ॥३७॥**

वेदाध्ययन नसकेसम्म वेदको नित्य आराधना (अध्ययन) गर्नू । यो विधिले पढिएको वेदमन्त्रले  द्विजलाई श्राप दिन तथा भलाई गर्न समर्थ बनाउँदछ र ऋषिहरुको लोकमा पुऱ्याउँदछ । देवताहरु दूध, अमृत, मह र घिउले प्रसन्न हुन्छन् ।

**तस्मादहरहर्वेदमनध्यायमृते पठेत् ।**
**यदङ्ग तदनध्याये गुरोर्वचनमाचरेत्॥३८॥**

यसैले प्रतिदिन अनध्यायलाई छोडी वेद पढ्नू । वेदका अङ्गलाई अनध्यायमा पढ्नू । गुरुको आज्ञा पालन गर्नू ।

**व्यतिक्रमादसम्पूर्णमनहंसकृतिराचरेत् ।**

परत्रेह च तद् ब्रह्म अनधीतमपि द्विजम् ॥३९॥

वाधाले गर्दा वेदको अध्ययन पूरा हुन नसके पनि उसले अहङ्कार नलिई आचरण गर्दै गर्नू । नपढेको भएपनि त्यो वेदले यसलोक र परलोकमा द्विजको भलो गर्दछ ।

यस्तूपनयनादेतदामृत्योर्व्रतमाचरेत् ।
स नैष्ठिको ब्रह्मचारी ब्रह्मसायुज्यमाप्नुयात् ॥४०॥

उपनयनदेखि मृत्युपर्यन्त यो व्रत पालना गर्ने नैष्ठिक ब्रह्मचारी द्विजहरुले ब्रह्मको सान्निध्य प्राप्त गर्दछन् ।

उपकुर्वाणको यस्तु द्विजः षड्विंशवार्षिकः ।
केशान्तकर्मणा तत्र यथोक्तचरितव्रतः ॥४१॥
समाप्य वेदान् वेदौ वा वेदं वा प्रसभं द्विजः ।
स्नायीत गुर्वनुज्ञातः प्रवृत्तोदितदक्षिणः ॥४२॥

छब्बीस वर्षको हुँदा विधिपूर्वक आचरण गरिरहेको व्रती द्विज जसले केशान्तकर्म सहित गुरुकुलमा परिश्रम गरी चार, तीन, दुई वा एक वेद पढी सकेको छ उसले गुरुको आज्ञा लिई उनले मागेको दक्षिणा दिई नुहाओस् । यस्तालाई उपकुर्वाणक भनिन्छ ।

॥ इति श्रीवेदव्यासीये धर्मशास्त्रे ब्रह्मचर्याधिकारोऽनाम प्रथमोऽध्यायः ॥१॥



मोहन प्रसाद सापकोटाद्वारा नेपाली भाषामा गरिएको व्याससम्तिको पहिलो अध्यायको भावानुवाद समाप्त भयो ।



आदितः श्लोकानां समष्ट्यङ्काः-०+४२=४२
शुरुदेखिको श्लोकसङ्ख्या : ४२



## ॥ अथ द्वितीयोऽध्यायः ॥
## (दोश्रो अध्याय)

**एवं स्नातकतां प्राप्तो द्वितीयाश्रमकाङ्क्षया ।**
**प्रतीक्षेत विवाहार्थमनिन्द्यान्वयसम्भवाम् ॥१॥**

यसरी स्नातक ब्रह्मचारीले गृहस्थाश्रममा प्रवेश गर्ने इच्छाले विवाहका लागि, निन्दागर्न अयोग्य कुलमा जन्मेकी कन्याको प्रतिक्षा गर्नू ।

**अरोगादुष्टवंशोत्थामशुल्कादानदूषिताम् ।**
**सवर्णामसमानार्षममातृपितृगोत्रजाम् ॥२॥**

निरोगी, निर्दोश कुलकी, शुल्क दोषबाट मुक्त, समान वर्णकी, आफ्नो भन्दा फरक प्रवरकी, मातापिताका गोत्रभन्दा फरक गोत्रकी, ।

**अनन्यपूर्विकां लघ्वीं शुभलक्षणसंयुताम् ।**
**धृताधोवसनां गौरीं विख्यातदशपूरुषाम् ॥३॥**

पहिले विवाह नगरिएकी, फुर्तिली, शुभ लक्षणकी, अधोवस्त्र लगाउने, गोरी र दश पुस्तादेखि प्रख्यात कुलकी कन्यासँग विवाह गर्नू ।

**ख्यातनाम्नः पुत्रवतः सदाचारवतः सतः ।**
**दातुमिच्छोर्दुहितरं प्राप्य धर्मेण चोद्वहेत् ॥४॥**

प्रख्यात, पुत्रवान्, सदाचारी, सज्जन र विवाह गरिदिन चाहने बाउकी छोरीलाई पाई धर्म अनुसार उनीसँग विवाह गर्नू ।

**ब्राह्मोद्वाहविधानेन तदभावेऽपरो विधिः ।**
**दातव्यैषा सदृक्षाय वयोविद्यान्वयादिभिः ॥५॥**

ब्राह्म विधिले र सो नभए क्रमशः अरु विधिले विवाह गर्नू । कन्याको विवाह उमेर, विद्या र कुलमा समान भएको वरसँग गर्नू ।

**पितृतत्पितृभ्रातृषु पितृव्यज्ञातिमातृषु ।**
**पूर्वाभावे परो दद्यात् सर्वाभावे स्वयं व्रजेत् ॥६॥**

बुबा, हजूरबुबा, दाजुभाई, सानुबा, ठूलोबा, पितृकुलका व्यक्ति र आमामध्ये पहिलोको अभावमा क्रमशः दोश्रोले कन्यादान गर्नू कोही नभए कन्या आफैंले वर खोज्नू ।

**यदि सा दातृवैकल्याद्रजः पश्येत् कुमारिका ।**
**भ्रूणहत्याश्च यावत्यः पतितः स्यात्तदप्रदः ॥७॥**

विवाहपूर्व असावधानीले कन्या रजस्वला भए रजस्वला भए जति पटक भ्रूणहत्या भएको मानिन्छ र कन्यादान नगर्ने व्यक्ति पतित हुन्छ ।

**तुभ्यं दास्याम्यहममिति ग्रहीष्यामीति यस्तयोः ।**
**कृत्वा समयमन्योन्यं भजते न स दण्डभाक् ॥८॥**

'म तिमिलाई कन्या दिन्छु' र 'म कन्या लिन्छु' भनी एकआपसमा प्रतिज्ञा गर्नेमध्ये जसले प्रतिज्ञा तोड्दछ उ दण्डनीय हुन्छ ।

**त्यजन्नदुष्टां दण्ड्यः स्याद् दूषयंश्चाप्यदूषिताम् ।**
**तावन्न दुष्टं दुष्टं च स्वार्थेभ्यो भेदयंश्च तत् ॥९॥**

निर्दोष पत्नीलाई त्याग्ने पति दण्डनीय हुन्छ । यसैगरी, दोष नभएकी स्त्रीलाई दोष लगाउने पनि दण्डनीय हुन्छ ।

**ऊढायां हि सवर्णायामन्यां वा काममुद्वहेत् ।**
**तस्यामुत्पादितः पुत्रो न सवर्णात् प्रहीयते ॥१०॥**

समान जातकी स्त्रीसँग विवाह गरेपछि पनि चाहेमा उसले अरु समानजातका स्त्रीसँग पनि विवाह गर्न सक्दछ । यसो गर्दा जन्मने पुत्र बाबुको जातबाट तल झर्दैन ।

**उद्वहेत् क्षत्रियां विप्रो वैश्याञ्च क्षत्त्रियो विशाम् ।**
**न तु शूद्रां द्विजः कश्चिन्नाधमः पूर्ववर्णजाम् ॥११॥**

ब्राह्मणले छेत्रीनी र वैश्यासँग विवाह गरोस् (गर्न सक्दछ) । छेत्रीले वैश्यासँग (पनि) विवाह गरोस् (गर्न सक्दछ) । कुनै द्विजले शूद्र-कन्यासँग तथा अधम पुरुष र उच्च स्त्रीबाट जन्मिएकी कन्यासँग विवाह गर्न सक्दैन ।

**नानावर्णासु भार्यासु सवर्णा सहचारिणी ।**
**धर्म्या धर्मेषु धर्मिष्ठा ज्येष्ठा तस्य स्वजातिषु ॥१२॥**

विभिन्न जातका पत्नीमा सजातइी पत्नी सहचारिणी हुन्छे । सजातीयमा पनि जेठी र धर्मशीला नै धर्मकार्यमा धर्म-पत्नी हुन्छे ।

**पाटितोयं द्विजाः पूर्वमेव देहः स्वयम्भुवा ।**
**पतयोऽर्द्धेन चार्द्धेन पत्न्योऽभूवन्निति श्रुतिः ॥१३॥**

हे द्विजहरु ! पूर्वकालमा ब्रह्माले एउटै शरीरलाई दुई फ्याक गरी आधाबाट पति र आधाबाट पत्नीको निर्माण गरेका हुन् भनी वेदले भन्दछ ।

**यावन्न विन्दते जायां तावदर्धो भवेत् पुमान् ।**
**नार्द्धं प्रजायते सर्वं प्रजायेतेत्यपि श्रुतिः ॥१४॥**

जबसम्म पुरुषले पत्नी पाउँदैन तबसम्म उ आधा नै रहन्छ । आधाले नभई पूरा भएपछि (मात्र सन्तान) उत्पन्न हुन्छ भनेर पनि वेदले नै भनेको छ ।

**गुर्वी सा भूस्त्रिवर्गस्य वोढुं नान्येन शक्यते ।**
**यतस्ततोऽन्वहं भूत्वा स्ववशो बिभृयाच्चताम् ॥१५॥**

पत्नी भनेका धर्म, अर्थ र काम अर्थात् त्रिवर्गको महान् भूमि हुन् । उनलाई अरु कसैले वहन गर्न नसक्ने हुनाले प्रतिदिन संयमित भई उनलाई धारण गर्नू ।

**कृतदारोऽग्निपत्नीभ्यां कृतवेश्मा गृहं वसेत् ।**
**स्वकृत्यं वित्तमासाद्य वैतानाग्निं न हापयेत् ॥१६॥**

विवाह गरी घर बनाएर अग्नि र पत्नीका साथ त्यहाँ बस्नू । आफूले कमाएको धन पाई वैतान अग्निलाई नत्याग्नू ।

**स्मार्त्तं वैवाहिके वह्नौ श्रौतं वैतातिनाकाग्निषु ।**
**कर्म कुर्यात् प्रतिदिनं विधिवत् प्रीतिपूर्वतः ॥१७॥**

वेदविहीत कर्म विवाहाग्निमा र स्मृतिविहीत कर्म वैतान अग्निमा प्रतिदिन
विधिपूर्वक मन लगाएर गर्ने गर्नू ।

**सम्यग्धर्मार्थकामेषु दम्पतिभ्यामहर्निशम् ।**
**एकचित्ततया भाव्यं समानव्रतवृत्तितः ॥१८॥**

धर्म, अर्थ र कामका विषयमा पतिपत्नीको रातदिन एउटै मत
तथा दुवैको समान व्रत र वृत्ति (पेसा) हुनु पर्दछ ।

**न पृथग्विद्यते स्त्रीणां त्रिवर्गविधिसाधनम् ।**
**भावतो ह्यतिदेशाद्वा इति शास्त्रविधिः परः ॥१९॥**

प्रेम वा अतिदेश (विषयान्तरण वा स्थानान्तरण) का कारण धर्म, अर्थ र कामका विधिको
स्त्रीको लागि पतिभन्दा बेग्लै साधना गरिएको छैन, एकसाथ गर्नू नै शास्त्रको
उत्तम विधि हो । (दाम्पत्य जीवनमा कुनै पनि धर्म स्त्रीले छुट्टै गर्ने विधान छैन) ।

**पत्युः पूर्वं समुत्थाय देहशुद्धिं विधाय च ।**
**उत्थाप्य शयनाद्यानि कृत्वा वेश्मविशोधनम् ॥२०॥**

स्त्रीले पतिभन्दा पहिले उठेर शरीरको शुद्धि गरी ओछ्यान उठाएर मिलाई घर सफा गर्नू ।

**मार्जनैर्लेपनैः प्राप्य साग्निशालं स्वमङ्गनम् ।**
**शोधयेदग्निकार्याणि स्निग्धान्युष्णेन वारिणा ॥२१॥**

बढारकुँडार र लिपपोत गरी यज्ञशाला समेत आँगन सफा पारी यज्ञमा
प्रयोग हुने चिल्ला भाँडालाई तातो पानीले धुनू ।

**प्रोक्षणीरिति तान्येव यथास्थानं प्रकल्पयेत् ।**
**द्वन्द्वपात्राणि सर्वाणि न कदाचिद्वियोजयेत् ॥२२॥**

त्यसपछि पवित्र जल छर्की तिनलाई यथास्थानमा राख्नू । जोडी वस्तु (ओखल-मुसल, लोरो-सिलौटो आदि) लाई कहिल्यै छुट्टाछुट्टै नराख्नू ।

**शोधयीत्वा तु पात्राणि पूरयीत्वा तु धारयेत् ।**
**महानसस्य पात्राणि बहिः प्रक्षाल्य सर्वथा ॥२३॥**

पानीका भाँडा सफा गरेपछि तिनमा पानी भरेर राख्ने गर्नू । सधैं भान्छाका भाँडा बाहिर निकाली माझेर फेरी भान्छाभित्र नै राख्ने गर्नू । (सम्भव हुँदासम्म भान्छामै जुठा भाँडा नमाझ्नू) ।

**मृद्भिश्च शोधयेच्चुल्लीं तत्राग्निं विन्यसेत्ततः ।**
**स्मृत्वा नियोगपात्राणि रसांश्च द्रविणानि च ॥२४॥**

माटोले लिपी चुलो शुद्ध पार्नू र आगो बाल्नू । आज प्रयोग गर्ने भाँडाकुँडा, दूध-घिउ आदि रस तथा द्रव्यका बारेमा विचार गरी (जोहो गरी),.. ।

**कृतपूर्वाह्णकार्या च स्वगुरूनभिवादयेत् ।**
**ताभ्यां भर्तृपितृभ्यां वा भ्रातृमातुलबान्धवैः ॥२५॥**

दिनको पूर्वार्द्धमा हुने गर्ने काम सकी गुरुजनलाई अभिवादन गर्नू । पति, पिता, दाजुभाई, मामा र नातेदारले दिएको... ।

**वस्त्रालङ्काररत्नानि प्रदत्तान्येव धारयेत् ।**
**मनोवाक्कर्मभिः शुद्धा पतिदेशानुवर्तिनी ॥२६॥**

कपडा, अलङ्कार र रत्न नै लगाउनू । पत्नी मन-वचन-कर्मले पवित्र रहने, पतिको आदेश पालना गर्ने,...।

**छायेवानुगता स्वच्छा सखीव हितकर्मसु ।**
**दासीवाऽऽदिष्टकार्येषु भार्या भर्त्तुः सदा भवेत् ॥२७॥**

छायाझैं पतिका पछिपछि हिँड्ने, स्वच्छ-हितकारी कार्यमा मित्रको जस्तो र पतिको इच्छाका कार्यमा दासीको जस्तो व्यवहार गर्ने हुनू ।

**ततोऽन्नसाधनं कृत्वा पतये विनिवेद्य तत् ।**
**वैश्वदेवकृतैरन्नैर्भोजनीयांश्च भोजयेत् ॥२८॥**

त्यसपछि खाना पकाई पतिलाई समर्पित गर्नू, वैश्वदेव यज्ञ गरी बाँकी अन्नमध्येबाट ख्वाउनुपर्ने नोकर आदिलाई (पहिले) खुवाउनू ।

**पतिश्चैतदनुज्ञाता शिष्टमन्वाद्यमात्मना ।**
**भुक्त्वा नयेदहःशेषमायव्ययविन्तिया ॥२९॥**

पतिलाई खुवाएर उनको अनुमतिले बाँकी रहेको खाना खानू । खाएपछि बाँकी दिन परिवारको आय-व्ययको विचारविमर्श गर्दै बिताउनू । (कोषको व्यवस्थापन गृहलक्ष्मीले गर्नुपर्दछ, गर्न नसक्ने वा नजान्ने भए लक्ष्मी स्थिर हुँदैन) ।

**पुनः सायं यथाप्रातर्गृहशुद्धिं विधाय च ।**
**कृतान्नसाधना साध्वी सुभृशं भोजयेत् पतिम् ॥३०॥**

फेरी साँझमा पनि बिहान गरे जस्तै घरको सफाई गरी खाना पकाई पतिव्रता पत्नीले पतिलाई पेटभरी खुवाउनू । (घरमा धेरै स्त्रीहुँदा घरभित्र र बाहिरको सरसफाईमा भागबण्डा नलगाउनू, जो यसमा बढी सहभागी र सतर्क हुन्छ उसैलाई लक्ष्मी प्राप्त हुन्छ) ।

**नातितृप्त्या स्वयं भुक्त्वा गृहनीतिं विधाय च ।**
**आस्तीर्य साधु शयनं ततः परिचरेत् पतिम् ॥३१॥**

केही भोक बाँकी रहँदै खान छोडी घरको योजना बनाएर उत्तम ओछ्यान लगाई त्यसपछि पतिको सेवा गर्नू ।

**सुप्तेपतौ तदभ्यासे स्वेपेत्तद्गतमानसा ।**
**अनग्ना चाप्रमत्ता च निष्कामा च जितेन्द्रिया ॥३२॥**

पति सुतेपछि लुगा लगाई, सावधान भएर, कामरहित भई इन्द्रियलाई जितेर र पतिमा मन लगाएर पतिसँगै सुत्नू ।

**नोच्चैर्वदेन्न परुषं न बहून् पत्युरप्रियम् ।**
**न केनचिद् विवदेच्च अप्रलापविलापिनी ॥३३॥**

ठूलो स्वरले नबोल्नू । कटु वचन नबोल्नू । धेरै जनासँग नबोल्नू । पतिलाई मन नपर्ने कुरा नबोल्नू । बकम्फुसे गफ र विलाप (वा पीर) नगर्नू ।

**न चातिव्ययशीला स्यान्न धर्मार्थविरोधिनी ।**
**प्रमादोन्मादरोषेर्ष्यावञ्चनञ्चातिमानिताम् ॥३४॥**

खर्चालु नहुनू । धर्म र अर्थको विरोधी नहुनू । आलस्य, पागलपन, क्रोध, ईर्ष्या, ठगी र घमण्ड नगर्नू । (आफू जति नम्र (सानो) हुन सक्यो त्यति भगवान्ले ठूलो बनाई दिन्छन्, आफू जति ठूलो भयो भगवान्ले उती सानो बनाई दिन्छन्) ।

**पैशुन्यहिंसाविद्वेषमहाहङ्कारधूर्त्तताः ।**
**नास्तिक्यसाहसस्तेयदम्भान् साध्वी विवर्जयेत् ॥३५॥**

नीचता, हिंसा, शत्रुता, ठूलो अहङ्कार, धूर्तता, नास्तिकता, अत्याचार, चोरी र दम्भलाई पतिव्रता स्त्रीले छोडी दिनू ।

**एवं परिचरन्ती सा पतिं परमदैवतम् ।**
**यशः शमिह यात्येव परत्र च सलोकताम् ॥३६॥**

यसरी परमदेव पतिको सेवा गर्दै रहँदा यसलोकमा यश र शान्ति पाउँदछे भने परलोकमा उत्तम शहर प्राप्त गर्दछे ।

**योषितो नित्यकर्मोक्तं नैमित्तिकमथोच्यते ।**
**रजोदर्शनतो दोषात् सर्वमेव परित्यजेत् ॥३७॥**

स्त्रीको नित्यकर्मका बारेमा बताइयो । अब नैमित्तिक कर्मका बारेमा बताइनेछ । रजोदर्शन हुँदा त्यसको दोषले गर्दा सबै कुरा छोड्नू ।

**सर्वैरलक्षिता शीघ्रं लज्जिताऽन्तर्गृहे वसेत् ।**
**एकाम्बरावृता दीना स्नानालङ्कारवर्जिता ॥३८॥**

कसैले नदेख्ने गरी, एउटै मात्र लुगा लगाई, दीन बनी, स्नान नगरी, अलङ्कार नलगाई एवं लजालु भई घरभित्र बस्ने गर्नू ।

**मौनिन्यधोमुखी चक्षुष्पाणिपद्भिरचञ्चला ।**
**अश्नईीत् केवलं भक्तं नक्तं मृण्मयभाजने ॥३९॥**

मौन बसी, निहुरिएर तथा हात, खुट्टाको चञ्चलता नगरी रातमा केवल माटाको भाँडामा भात खानू ।

**स्वपेद्भूमावप्रमत्ता क्षपेदेवमहस्त्रयम् ।**
**स्नायीत सा त्रिरात्रान्ते सचैलमुदिते रवौ ॥४०॥**
**विलोक्य भर्त्तुर्वदनं शुद्धा भवति धर्मतः ।**
**कृतशौचा पुनः कर्म पूर्ववच्च समाचरेत् ॥४१॥**

होसियारपूर्वक जमिनमा सुत्नू । यसरी तीन दिन बिताउनू । तीन रात बितेर सूर्योदय भएपछि सवस्त्र नुहाउनू । चौथो दिन नुहाएर पतिको मुख देखेपछि उनी धर्मतः शुद्ध हुन्छिन् । शुद्ध भएपछि फेरी पहिले जसरी नै कार्य गर्नू ।

**रजोदर्शनतो याः स्यू रात्रयः षोडशर्त्तवः ।**
**ततः पुंबीजमक्लिष्टं शुद्धे क्षेत्रे प्ररोहति ॥४२॥**

रजोदर्शन देखिका सोह्र रात ऋतुका रात (ऋतुकाल) हुन्छन् जसमा पुरुषको बीज बिना कठिनाई शुद्ध क्षेत्रमा उम्रन पुग्दछ (गर्भाधान हुने गर्दछ) ।

**चतस्रश्चादिमा रात्रीः पर्ववच्च विवर्जयेत् ।**
**गच्छेद्युग्मासु रात्रीषु पौष्णपित्रर्क्षराक्षसान् ॥४३॥**

शुरुका चार रातलाई पर्व मानी तथा रेवती, मघा र मूल नक्षत्रलाई समेत छाडी जोर रातमा पत्नीसँग जानू ।

**प्रच्छादितादित्यपथे पुमान् गच्छेत् स्वयोषितः ।**
**क्षौमाऽलङ्कृतदवाप्नोति पुत्रं पूजितलक्षणम् ॥४४॥**

सूर्यरश्मि नपुग्ने स्थानमा पुरुषले स्व-स्त्री सम्भोग गर्नू । (सहवास कालमा) रेशमी वा सनको कपडा लगाएको मानिसले पुण्य लक्षण भएको पुत्र प्राप्त गर्दछ ।

**ऋतुकालेऽभिगम्यैवं ब्रह्मचर्ये व्यवस्थितः ।
गच्छन्नपि यथाकामं न दुष्टः स्यादनन्यकृत् ॥४५॥**

ऋतुकालमा मात्र स्त्रीसँग जाने गरेको ब्रह्मचर्य व्रती मनुष्य अरु दुष्कर्म गर्दैन भने इच्छानुसार स्त्रीसँग सम्भोग गरेर दोषी हुँदैन ।

**भ्रूणहत्यामवाप्नोति ऋतौ भार्यापराङ्मुखः ।
सा त्ववाप्याऽन्यतो गर्भं त्याज्या भवति पापिनी ॥४६॥**

जो ऋतुकालमा पनि पत्नीसँग मुख फेर्दछ उसलाई भ्रूणहत्याको पाप लाग्दछ । त्यस्तै उसकी पत्नी पनि अरुको पेट बोक्छे भने त्यस्ती पापिनी त्याज्य हुन्छे ।

**महापातकदुष्टा च पतिगर्भविनाशिनी ।
सद्वृत्तचारिणीं पत्नीं त्यक्त्वा पतति धर्मतः ॥४७॥**

पतिको गर्भ नष्टगर्ने स्त्रीलाई महापापको दोष लाग्छ । जो पुरुष सदाचारमा रहेकी पत्नीलाई त्याग्दछ उ धर्मबाट पतित हुन्छ ।

**महापातकदुष्टोऽपि नाप्रतीक्ष्यस्तया पतिः ।
अशुद्धे क्षयमादूरं स्थिताताषमनुचिन्तया ॥४८॥**

महापापको दोषी पति पनि पत्नीले कुर्न अयोग्य हुँदैन । पति अशुद्ध हुँदा टाढा बसेर पनि मनले समिपमै रहनू ।

**व्यभिचारेण दुष्टानां पतीनां दर्शनादृते ।
धिक्कृतायामवाच्यायामन्यत्र वासयेत् पतिः ॥४९॥**

व्यभिचारले गर्दा दोषी भएकी स्त्रीलाई पतिको दर्शनका लागि तथा धिक्कार गरेर बोल्न समेत छोडिएकी पत्नी (स्त्री) लाई पनि अर्को ठाउँमा वास दिनू ।

**पुनस्तामार्त्तवस्नातां पूर्ववद् व्यवहारयेत् ।
धूर्त्ताञ्च धर्मकामघ्नीमपुत्रां दीर्घरोगिणीम् ॥५०॥**

त्यस्ती (परभोक्ता) पत्नीसँग पनि फेरी रजस्वला भएर नुहाएपछि पहिलेझैं व्यवहार गर्नू । धूर्त, कर्म र कामको हनन गर्ने, पुत्रहीन, दीर्घरोगी,... ।

सुदुष्टां व्यसनासक्तामहितामधिवासयेत् ।
अधिविन्नामपि विभुः स्त्रीणान्तु समतामियात् ॥५१॥

अती दुष्टा, दुर्व्यसनी र पतिको अहित चिताउने पत्नीलाई उपेक्षा गरेर पतिले अर्की स्त्रीसँग विवाह गर्नू । जसको उपेक्षा गरेर अर्को विवाह गरिएको हो तिनलाई पनि लोग्नेले समान व्यवहार गर्नू ।

विवर्णा दीनवदना देशसंस्कारवर्जिता ।
पतिव्रता निराहारा शोष्यते प्रोषिते पतौ ॥५२॥

पति परदेश गएकी पतिव्रता पत्नी खस्केको रङ्ग र निन्याउरो मुख पारी शरीरका संस्कारले हीन र निराहार रहँदै दुब्लाउँदै जान्छे ।

मृतं भर्त्तारमादाय ब्राह्मणी बह्निमाविशेत् ।
जीवन्ती चेत्त्यक्तकेशा तपसा शोधयेद्वपुः ॥५३॥

ब्राह्मणीले मृत पतिलाई लिएर अग्निमा प्रवेश गर्नू । यदि जीवित रहने हो भने कपाल खौरेर तपस्याले शरीर पवित्र पार्नू ।

सर्वावस्थासु नारीणां न युक्तं स्यादरक्षणम् ।
तदेवानुक्रमात् कार्यं पितृभर्तृसुतादिभिः ॥५४॥

सबै अवस्थामा (बालक, युवा र वृद्ध) नारीलाई रक्षा नगर्नू उचित हुन्न । पिता, पति र पुत्रबाट अवस्थानुसार क्रमैले यिनको रक्षा गर्नू ।

जाताः सुरक्षिताया ये पुत्रपौत्रप्रपौत्रकाः ।
ये यजन्ति पितृन् यज्ञैर्मोक्षप्राप्तिमहोदयैः ॥५५॥
मृतां तामग्निहोत्रेण दाहयेद्विधिपूर्वकम् ।
दाहयेदविलम्बेन भार्याञ्चात्र व्रजेत सा ॥५६॥

राम्ररी रक्षिता स्त्रीबाट उत्पन्न हुने जुन छोरा, नाती र पनाती हुन्छन्, जसले पितृको मोक्षको प्राप्ति र ठूलो उन्नति गराउने खालका यज्ञको पूजा गर्दछन् तिनले मरेकी ति स्त्रीको त्यो अग्निहोत्रले विधिपूर्वक दाहसंस्कार गराउनु । पति त्यस्ती पत्नीको तुरुन्त दाह गराउन् । यसले उनी पितृलोक प्राप्त गर्दछिन् ।

॥ इति श्रीवेदव्यासीये धर्मशास्त्रे स्त्र्यधिकारोऽनाम द्वितीयोऽध्यायः ॥२॥



मोहन प्रसाद सापकोटाद्वारा नेपाली भाषामा गरिएको व्याससमृतिको
दोश्रो अध्यायको भावानुवाद समाप्त भयो ।



आदितः श्लोकानां समष्ट्यङ्काः-४२+५६=९८
शुरुदेखिको श्लोकसङ्ख्या : ९८



## ॥ अथ तृतीयोऽध्यायः ॥
## ॥ अथ स्नानादिविधि पूर्वाह्णकृत्यवर्णनम् ॥

**नित्यं नैमित्तिकं काम्यमिति कर्म त्रिधा मतम् ।
त्रिविधं तच्च वक्ष्यामि गृहस्थस्यावधार्यताम् ॥१॥**

नित्य, नैमित्तिक र काम्य गरी तीन थरी कर्म मानिएको छ । म, गृहस्थका ती तीन थरी कर्म वर्णन गर्दछु, त्यसलाई ग्रहण गर ।

**यामिन्याः पश्चिमे यामे त्यक्तनिद्रो हरिं स्मरेत् ।
आलोक्य मङ्गलद्रव्यं कर्माऽऽवश्यकमाचरेत् ॥२॥**

रातको अन्तिम प्रहरमा निद्रा त्यागी विष्णुलाई सम्झनू । माङ्गलिक वस्तुको दर्शनगरी शौचादि आवश्यक कर्म गर्नू ।

**कृतशौचो निषेव्याग्निं दन्तान् प्रक्ष्याल्य वारिणा ।
स्नात्वोपास्य द्विजः सन्ध्यां देवादींश्चैव तर्पयेत् ॥३॥**

द्विजले शौचादि कर्म सकेपछि अग्निको सेवन गरी, दाँतलाई पानीले सफा गर्नू, नुहाउनू, सन्ध्योपासना गर्नू र देवताको पूजा गर्नू ।

**वेदवेदाङ्गशास्त्राणि इतिहासानि चाभ्यसेत् ।**
**अध्यापयेच्च सच्छिष्यान् सद्विप्रांश्च द्विजोत्तमः ॥४॥**

ब्राह्मणले वेद, वेदाङ्ग, शास्त्र र इतिहासको पाठ गर्नू । उत्तम शिष्य र असल ब्राह्मणहरुलाई पढाउनू ।

**अलब्धं प्रापयेल्लब्ध्वा क्षणमात्रं समापयेत् ।**
**समर्थो हि समर्थेन नाविज्ञातः क्वचिद्वसेत् ॥५॥**

अप्राप्त कुरा प्राप्त गर्नू र प्राप्त कुरा तुरुन्त अरुलाई बाँड्नू । आफ्नु समर्थताबाट अनजान भएको समर्थले कतै वास नबस्नू ।

**सरित्सरसि वापीषु गर्तप्रस्रवणादिषु ।**
**स्नायीत यावदुद्धृत्य पञ्च पिण्डानि वारिणा ॥६॥**

नदी, तलाउ, स्नानागार, कुण्ड, झरना आदिबाट माटाका पाँच डल्ला निकालेर त्यहाँको पानीले नुहाउनू ।

**तीर्थाभावेऽप्यशक्त्यां वा स्नायात्तोयैः समाहृतैः ।**
**गृहाङ्गणगतस्तत्र यावदम्बरपीडनम् ॥७॥**

तीर्थको अभावमा वा अशक्त हुँदा तीर्थको जलले घरकै आँगनमा रही वस्त्र निचोर्न हुनेगरी नुहाउनू ।

**स्नानमब्दैवतैः कुर्यात् पावनैश्चापि मार्जनम् ।**
**मन्त्रैः प्राणांस्त्रिरायम्य सौरैश्चार्कं विलोकयेत् ॥८॥**

'आपो हिष्ठा' आदि जल देवताको मन्त्रले नुहाउनू । पवित्र पार्ने मन्त्रले शरीर सफा गर्नू । समन्त्र तीन प्राणायाम गरी देवता सूर्य भएका मन्त्रले सूर्यदर्शन गर्नू ।

**तिष्ठन् स्थित्वा तु गायत्रीं ततः स्वाध्यायमारभेत् ।**
**ऋचाञ्च यजुषां साम्नामथर्वाङ्गिरसामपि ॥९॥**

उभिएर नहल्लीकन गायत्रीको जप गर्नू । गायत्री जप गरि सकेपछि ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेदको स्वाध्याय (अध्ययन) शुरु गर्नू ।

**इतिहासपुराणानां वेदोपनिषदां द्विजः ।**
**शक्त्या सम्यक् पठेन्नित्यमल्पमप्यासमापनात् ॥१०॥**

द्विजले नित्य इतिहास, पुराण, वेद र उपनिषद यथाशक्ति बेग्लाबेग्लै पाठ गर्नू चाहे त्यो थोरै नै किन नहोस् ।

**स यज्ञदानतपसामखिलं फलमाप्नुयात् ।**
**वेदेभ्योऽन्यत्र संतुष्टः स विप्रः शूद्रतामियात् ॥**
**तस्मादहरहर्वेदं द्विजोऽधीयीत वाग्यतः ॥११॥**

यसबाट उसले यज्ञ, दान र तपका सबै फल प्राप्त गर्दछ । वेदलाई छोडी जो ब्राह्मण अरु ग्रन्थको पाठबाट सन्तुष्ट हुन्छ, उ शूद्र हुन जान्छ । यसैले मौन रही ब्राह्मणले दिनहुँ वेदको अध्ययन गर्नू ।

**धर्मशास्त्रेतिहासादि सर्वेषां शक्तितः पठेत् ।**
**कृतस्वाध्यायः प्रथमं तर्पयेच्चाथ देवताः ॥१२॥**

(त्यसपछि) सबैको (अरुका) धर्मशास्त्र र इतिहासलाई शक्ति अनुसार पढ्नू । स्वाध्याय सकेपछि देवतालाई तर्पण गर्नू ।

**जान्वाच्य दक्षिणं दर्भैः प्रागग्रैः सयवैस्तीलैः ।**
**पुरः क्षिप्तैः कराग्राभ्यां निर्गतैः प्राङ्मुखो द्विजः ॥**
**एकैकाञ्जलिदानेन प्रकृतिस्थोपवीतकः ॥१३॥**

दाहिने घुँडा टेकी, सव्य भई, पूर्वतिर फर्की, पूर्वतिर टुप्पो फर्केका कुश लिई हत्केलाका टुप्पोबाट अगिल्तिर खसाल्दै गरिएका जौ मिसिएका तिलसहितले एक-एक अँजुली जलले देवतालाई तर्पण गर्नू ।

**समाजानुद्वयो ब्रह्मसूत्रहार उदङ्मुखः ।**
**तिर्य्यग्दर्भैश्च वामाग्रैर्यवैस्तिलविमिश्रितैः ॥१४॥**

अम्भोभिरुत्तरक्षिप्तैः कनिष्ठामूलनिर्गतैः ।
द्वाभ्यां द्वाभ्याञ्जलिभ्यां मनुष्यांस्तर्पयेत्ततः ॥१५॥

त्यसपछि दुबै घुँडा बराबर जमिनमा टेकी, जनैलाई माला लाएजस्तो पारी, उत्तरतिर फर्की, बायाँतिर टुप्पो फर्केका र बाङ्गो पारेर राखिएका कुश, तिल मिसिएको जौले युक्त, कान्छी औँलाको फेदबाट निक्लेर उत्तरतिर खस्ने जलले मनुष्यलाई दुई-दुई अँजुली तर्पण दिनू ।

दक्षिणाभिमुखः सव्यं जान्वाच्य द्विगुणैः कुशैः ।
तिलैर्जलैश्च देशिन्या मूलदर्भाद्विनिःसृतैः ॥१६॥
दक्षिणासोपवीतः स्यात् क्रमेणाञ्जलिभिस्त्रिभिः ।
सन्तर्पयेद्दिव्यपितॄँस्तत्परांश्च पितृन् स्वकान् ॥१७॥

बायाँ घुँडा जमिनमा टेकी, दक्षिणतिर फर्की, अपसव्य भएर, दोबर कुश-तिल तथा चोर औँलाको फेदतिर कुश निक्लेको जलले क्रमैले तीन अँजुलीले स्वर्गका दिव्य पितृहरुलाई तर्पण गर्नू र त्यसपछि आफ्ना पितृहरुलाई तर्पण गर्नू ।

मातृमातामहांस्तद्वत्त्रीनेवं हि त्रिभिस्त्रिभिः ।
मातामहस्य येऽप्यन्ये गोत्रिणो दाहवर्जिताः ॥१८॥

माता, मातामह आदि तीनलाई पनि यसै गरी तीन-तीन अँजुली तर्पण गर्नू । मातामह बाहेकका अरु पनि जो दाहसंस्कारले वर्जित.. ।

तानेकाञ्जलिदानेन तर्पयेच्च पृथक् पृथक् ।
असंस्कृतप्रमीता ये प्रेतसंस्कारवर्जिताः ॥१९॥

(दिवंगत) सगोत्री छन् तिनलाई छुट्टाछुट्टै एक-एक अँजुली तर्पण दिएर तृप्त पार्नू । जो संस्कार नगरी मरेका छन् र जसको प्रेत-संस्कार गरिएको छैन..।

वस्त्रनिष्पीडनाम्भोभिस्तेषामाप्यायनम्भवेत् ।
अतर्पितेषु पितृषु वस्त्रं निष्पीडयेच्च यः ॥२०॥

तिनलाई कपडा निचोरेर निक्लेको जलले नै तर्पण हुन जान्छ । पितृलाई तृप्त नपारी (तर्पण नगरी) जसले (नुहाएका) कपडा निचोर्दछ...।

**निराशाः पितरस्तस्य भवन्ति सुरमानुषैः ।**
**पयो दर्भस्वधाकारगोत्रनामतिलैर्भवेत् ॥२१॥**

उसका पितृ, देवता र मनुष्यसमेत निराश हुन्छन् । कुश,
स्वधा शब्द, गोत्र, नाम र तिलका साथ...।

**सुदत्तं तत्पुनस्तेषामेकेनापि वृथा विना ।**
**अन्यचित्तेन यद्दत्तं यद्दत्तं विधिवर्जितम् ॥२२॥**

दिइएको जल सुदत्त हुन जान्छ तर यसमध्ये एक थोक पनि छुटाई दिइए त्यो जल (तर्पण)
व्यर्थ हुन्छ । अन्यत्र चित्त लगाएर, विधि नपुऱ्याई र..।

**अनासनस्थितेनापि तज्जलं रुधिरायते ।**
**एवं सन्तर्पिताः कामैस्तर्पकांस्तर्पयन्ति च ॥२३॥**

आसनमा नबसी जुन जल (तर्पण) दिइन्छ त्यो रगत हुन जान्छ । यसरी विधिले तृप्त
हुने (पितृ) ले कर्ता (जलदाता) को इच्छा तृप्त गरिदिन्छन् ।

**ब्रह्मविष्णुशिवादित्यमित्रवरुणनामभिः ।**
**पूजयेल्लक्षितैर्मन्त्रैर्जलमन्त्रोक्तदेवताः ॥२४॥**

जलका मन्त्रमा बताइएका देवतालाई ब्रह्मा, विष्णु, शिव, आदित्य, मित्र र
वरुणलाई तोकिएका मन्त्रले पूजा गर्नू ।

**उपस्थाय रवेः काष्ठां पूजयीत्वा च देवताः ।**
**ब्रह्माग्नीन्द्रौषधीजीवविष्णुनामहतांहसाम् ॥२५॥**
**अपां यत्तेति सत्कारं नमस्कारैः स्वनामभिः ।**
**कृत्वा मुखं समालभ्य स्नानमेवं समाचरेत् ॥२६॥**

सूर्यको दिशातिर मुख फर्काई सूर्योपस्थान गरेर देवताको पूजा गरी ब्रह्मा, अग्नि, इन्द्र, औषधी,
जीव र विष्णुका नामले नष्ट भएका छन् पाप जसका यस्ता देवतालाई 'यत् ते' आदि मन्त्रले
तिनको नामका साथ नमः भन्दै सत्कार गर्दै मुखको स्पर्श गरी नुहाउनू ।

**ततः प्रविश्य भवनमावसथ्ये हुताशने ।**
**पाकयज्ञांश्च चतुरो विदध्याद्विधिवद् द्विजः ॥२७॥**

त्यसपछि घरमा गई द्विजले आवसथ्य अग्निमा विधिपूर्वक चार थरी पाकयज्ञ तयार पार्नू ।

**अनाहितावसथ्याग्निरादायान्नं घृतप्लुतम् ।**
**शाकलेन विधानेन जुहुयाल्लौकिकेऽनले ॥२८॥**

जुन द्विजले आवसथ्य अग्निको आधान गरेको छैन उसले घिउमा भिजाइएका अन्नलाई लिई ऋग्वेदका शाकल शाखाको विधान अनुसार लौकिक अग्निमा होम गर्नू ।

**व्यस्याभिर्व्याहृतीभिश्च समस्ताभिस्ततः परम् ।**
**षड्भिर्देवकृतस्येति मन्त्रवद्भिर्यथाक्रमम् ॥२९॥**

छुट्टाछुट्टै व्याहृतिले र त्यसपछि एकमुष्ट व्याहृतिले ‘देकृतस्यैनसोऽवयजनमसि’ आदि पाँच मन्त्रको आहुतिले क्रमशः होम गर्नू ।

**प्राजापत्यं स्विष्टकृतं हुत्वैवं द्वादशाऽऽहुतीः ।**
**ओङ्कारपूर्वः स्वाहान्तस्त्यागः स्विष्टविधानतः ॥३०॥**

प्राजापत्य स्विष्टकृतका बाह्र आहुतिमा स्विष्ट विधान अनुसार पहिले ॐ र अन्तमा स्वाहा भनी आहुति हाल्नुपर्ने हुन्छ ।

**भुवि दर्भान् समास्तीर्य्य बलिकर्म समाचरेत् ।**
**विश्वेभ्यो देवेभ्य इति सर्वेभ्यो भूतेभ्य एव च ॥३१॥**
**भूतानां पतये चेति नमस्कारेण शास्त्रवित् ।**
**दद्याद्बलित्रयञ्चाग्रे पितृभ्यश्च स्वधा नमः ॥३२॥**

शास्त्र जानेकाहरुले जमिनमा कुश ओछ्याई विश्वेभ्यो देवेभ्यो नमः, सर्वेभ्यो भूतेभ्यो नमः र भूतेभ्यः पतये नमः भन्दै पहिले तीन बलि दिनु त्यसपछि पितृभ्यः स्वधा नमः भनी पितृलाई स्वधा दिनू ।

**पात्रनिर्णेजनं वारि वायव्यां दिशि निःक्षिपेत् ।**

**उद्धृत्य षोडशग्रासमात्रमन्नं घृतोक्षितम् ॥३३॥**

भाँडा पखालेको पानी वायव्य दिशामा फ्याँक्नू । घिउ हालिएका पाकेको भोजनबाट सोह्र गाँस मात्र निकाली...।

**इदमन्नं मनुष्येभ्यो हन्तेत्युक्त्वा समुत्सृजेत् ।**
**गोत्रनामस्वधाकारैः पितृभ्यश्चापि शक्तितः ॥३४॥**
**षड्भ्योऽन्नमन्वहं दद्यात् पितृयज्ञविधानतः ।**
**वेदादीनां पठेत् किञ्चिदल्पं ब्रह्ममखाप्तये ॥३५॥**

'इदमन्नं मनुष्येभ्यो हन्त' भनी राखिदिनू । छ पितृ (पिता, पितामह, प्रपितामह, माता, मातामह, र प्रमातामह) लाई तिनका गोत्र, नाम र अन्तमा स्वधा भन्दै यथाशक्ति पितृयज्ञको विधिले प्रतिदिन भोजन दिनु । ब्रह्मयज्ञको पूर्णताका लागि वेदआदिको थोरै पाठ गर्नू ।

**ततोऽन्यदन्नमादाय निर्गत्य भवनाद् बहिः ।**
**काकेभ्यः श्वपचेभ्यश्च प्रक्षिपेद् ग्रासमेव च ॥३६॥**

त्यसपछि घर बाहिर भोजन लिएर निक्ली काग र चाण्डाललाई राखि दिनू र गोग्रास पनि राखि दिनू ।

**उपविश्य गृहद्वारि तिष्ठेद् यावन्मुहूर्तकम् ।**
**अप्रभुक्तोऽतिथिं लिप्सुर्भावशुद्धः प्रतीक्षकः ॥३७॥**

नखाईकन शुद्ध विचारले एक मुहूर्त (अठचालीस मिनेट) सम्म अतिथि आउने आसमा घरको ढोकामा कुरेर बस्नू ।

**आगतं दूरतः शान्तं भोक्तुकाममकिञ्चनम् ।**
**दृष्ट्वा संमुखमभ्येत्य सत्कृत्य प्रश्रयार्च्चनैः ॥३८॥**

टाढाबाट आएको, शान्त स्वभावको, भोजनको इच्छा भएको र निर्धन अतिथिलाई सामुन्ने देखेपछि नजिकै गई नम्रता र अर्चना आदिले उनको सत्कार गर्नू ।

**पादधावनसम्मानाभ्यञ्जनादिभिरर्च्चितः ।**

त्रिदिवं प्रापयेत्सद्यो यज्ञस्याभ्यधिकोऽतिथिः ॥३९॥

गोडा धुवाई, सम्मान र मालिश आदिले पूजित अतिथिले गृहस्थलाई तुरुन्त स्वर्गको प्राप्ति गराइ दिन्छन् । अतिथि त यज्ञभन्दा पनि ठूला हुन्छन् ।

कालागतोऽतिथिर्दृष्टवेदपारो गृहागतः ।
द्वावेतौ पूजितौ स्वर्गं नयतोऽधस्त्वपूजितौ ॥४०॥

भोजनका समयमा आएको अतिथि र घरमा आएको वेदमा पारङ्गत विद्वान यी दुवै पुजिँदा यिनले स्वर्ग लिएर जान्छन् र नपुजिँदा यिनले अधोगतितिर धकेलिदिन्छन् ।

विवाह्यस्नातकक्ष्माभृदाचार्यसुहृदृत्विजः ।
अर्घ्या भवन्ति धर्मेण प्रतिवर्षं गृहागताः ॥४१॥

प्रतिवर्ष घरमा आएका ज्वाईं, स्नातक, राजा, आचार्य, हितैषी जन र ऋत्विक् अर्घ्यका योग्य हुन्छन् ।

गृहागताय सत्कृत्य श्रोत्रियाय यथाविधि ।
भक्त्योपकल्पयेदेकं महाभागं विसर्जयेत् ॥४२॥

घरमा आएका श्रोत्रियलाई यथा विधि सत्कार गरी श्रद्धापूर्वक भोजनको एक भाग दिएर विदा गर्नू ।

विसर्जयेदनुव्रज्य सुतृप्तश्रोत्रियातिथीन् ।
मित्रमातुलसम्बन्धिबान्धवान् समुपागतान् ॥४३॥

टन्न अघाएका श्रोत्रिय, अतिथि, मित्र, मामा, नातेदार र बन्धुबान्धवलाई तिनको पछिपछि गएर बिदा गर्नू ।

भोजयेद् गृहिणो भिक्षां सत्कृतां भिक्षुकोऽर्हति ।
स्वाद्वन्नमश्नन्नस्वादु ददद् गच्छत्यधोगतिम् ॥४४॥

घरमा आएका गृहस्थीलाई खुवाउनू । (घरमा आएका) भिक्षुक सत्कारपूर्वक दिइएका भिक्षाका लागि योग्य हुन्छन् । आफू मिठो खाई अरुलाई नमिठो

खुवाउने मानिस अधोगति तिर जान्छ ।

**गर्भिण्यातुरभृत्येषु बालवृद्धातुरादिषु ।**
**बुभुक्षितेषु भुञ्जानो गृहस्थोऽश्नाति किल्बिषम् ॥४५॥**

गर्भिणी स्त्री, रोगी नोकरचाकर, बालबालिका, वृद्धवृद्धा र रोगी जनलाई
भोकै राखी जो गृहस्थी पहिले आफैं खान्छ उसले पाप खान्छ ।

**नाद्याद् गृध्येन्न पाकान्नं कदाचिदनिमन्त्रितः ।**
**निमन्त्रितोऽपि निन्द्येन प्रत्याख्यानं द्विजोऽर्हति ॥४६॥**

अनिम्तालु ब्राह्मणले कहिल्यै अन्यत्र पकाइएको अन्न नखानू, खाने आश पनि नगर्नू ।
निन्दनीयको निम्ता पनि ब्राह्मणका लागि नमान्न योग्य हुन्छ ।

**शूद्राभिशस्तवार्धुष्यवाग्दुष्टक्रूरतस्कराः ।**
**क्रुद्धापविद्धबद्धोग्रवधबन्धनजीविन ॥४७॥**

शूद्र, दोषारोपी, ब्याज खाने, दुष्ट बोली हुने, निर्दयी, चोर, रिसाहा, मातापिताबाट
त्यक्त, दास, उग्रवध र पशुपंक्षी फँसाएर जीविका चलाउने,... ।

**शैलूषशौण्डिकोन्नद्धोन्मत्तव्रात्यव्रतच्युताः ।**
**नग्ननास्तिकनिर्लज्जपिशुनव्यसनान्विताः ॥४८॥**

...नट, मद्य-पेशा भएको, घमण्डी, उन्मादी, संस्कार हीन, व्रतभ्रष्ट, नग्न, नास्तिक, निर्लज्ज,
चुगलीखोर, दुर्व्यसनी,... ।

**कदर्य्यस्त्रीजितानार्य्यपरवादकृता नराः ।**
**अनीशा कीर्तिमन्तोऽपि राजदेवस्वहारकाः ॥४९॥**

...कञ्जुस, जोईटिङ्गे, अनार्य, परनिन्दक, यशस्वी भएर पनि पराधीन,
देवस्व र राजस्व हरण गर्ने,... ।

**शयनासनसंसर्गवृत्तकर्मादिदूषिताः ।**
**अश्रद्दधानाः पतिता भ्रष्टाचारादयश्च ये ॥५०॥**

...बिछ्यौना-आसन- सङ्गत-वृत्ति र कर्म आदिका विषयमा दोषी, श्रद्धाहीन, पतित एवं भ्रष्टाचारीको अन्न...।

**अभोज्यान्नाः स्युरन्नादो यस्यः यः स्यात्स तत्समः ।**
**नापितान्वयमित्रार्द्धसीरिणो दासगोपकाः ॥५१॥**

...अभोज्य अन्न हो किनकि जसले जसको अन्न खान्छ उ त्यही समान हुन्छ । नाई, कुलमित्र, अधियामा खेती गर्ने, दास र गोठालो...।

**शूद्राणामप्यमीषान्तु भुक्त्वाऽन्नं नैव दुष्यति ।**
**धर्मेणान्योन्यभोज्यान्ना द्विजास्तु विदितान्वयाः ॥५२॥**

...यी शूद्र नै भएपनि यीनको अन्न खाएर मानिस दोषी हुँदैन । प्रसिद्ध कुलका द्विजहरू एकआपसमा धर्मपूर्वक एकअर्काको भोजन खान सक्दछन् ।

**स्ववृत्त्योपार्जितं मेध्यमकेशकृमिमक्षिकम् ।**
**अश्वलीढमगोघ्रातमस्पृष्टं शूद्रवायसैः ॥५३॥**

आफ्नो परिश्रमले कमाएको, पवित्र, रौं-कीरा-झिँगा नपरेको, कुकुरले नचाटेको, गाईले नसुँघेको र शुद्र-काग आदिले नछोएको खाना, खान योग्य हुन्छ ।

**अनुच्छिष्टमसंदुष्टमपर्युषितमेव च ।**
**अम्लानवाह्य मन्नाद्यमद्यान्नित्यं सुसंस्कृतम् ॥५४॥**

जुठो नभएको, कुनै विकार नभएको, बासी नभएको, फोहोर नदेखिने र राम्रोसँग पाकेको खाना सधैं खानू ।

**कृसरापूपसंयावपायसं शष्कुलीति च ।**
**नाश्नईीद् ब्राह्मणो मांसनियुक्तः कथञ्चनः ॥५५॥**

खिचडी, पुवा, संयाव (घिउ र गुलियो मिसाएर बनाइएको मैदाको रोटी), खीर र पुरी खानू । यज्ञादिमा नियुक्त हुँदा बाहेकका अवस्थामा ब्राह्मणले मासु नखानू ।

**क्रतौ श्राद्धे नियुक्तो वा अनश्नत् पतति द्विजः ।**
**मृगयोपार्जितं मांसमभ्यर्च्य पितृदेवताः ॥५६॥**

निमन्त्रित ब्राह्मणले यज्ञ र श्राद्धमा नखाए उ पतित हुन्छ । शिकार गरी लेराएको मासुले देवपितृ पूजा गरी ...।

**क्षत्त्रियो द्वादशोनं तत् क्रीत्वा वैश्योऽपि धर्मतः ।**
**द्विजो जग्ध्वा वृथामांसं हत्वाऽप्यविधिना पशून् ॥५७॥**

क्षत्रियले र वैश्यले बाह्र (?) भन्दा कममा त्यो मासु धर्म अनुसार किनी खान सक्दछ । द्विजले विधिविना पशु मारेर व्यर्थको मासु खाएमा...।

**निरयेष्वक्षयं वासमाप्नोत्याचन्द्रतारकम् ।**
**सर्वान्कामान्समासाद्य फलमश्वमखस्य च ॥**
**मुनिसाम्यमवाप्नोति गृहस्थोऽपि द्विजोत्तमः ॥५८॥**

जबसम्म चन्द्रसूर्य रहन्छन् तबसम्म नरकको अक्षय बास पाउँदछ । गृहस्थी भएर पनि वृथामांस नखाने ब्राह्मण सबै कामना र अश्वमेधको फल पाई मुनि सरह हुन्छ ।

**द्विजभोज्यानि गव्यानि माहिषाणि पयांसि च ।**
**नर्दशासन्धिसम्बन्धिवत्सवन्ति पयांसि च ॥५९॥**

गाईभैंसीको दूध द्विजका लागि खान योग्य हुन्छ । बिहाएको दश दिन पछिको, गर्भिणी नभएको र बाछाबाछी भएका गाईको दूध पनि खान हुन्छ ।

**पलाण्डुश्वेतवृन्ताकरक्तमूलकमेव च ।**
**गृञ्जनारुणवृक्षासृग्जन्तुगर्भफलानि च ॥६०॥**

प्याज, सेतो भ्याण्टा, रातो मूला (गान्टे), लसुन, वृक्षको रातो चोप, डुम्रीको फल तथा ..।

**अकालकुसुमादीनि द्विजो जग्ध्वैन्दवं चरेत् ।**
**वाग्दूषितमविज्ञातमन्यपीडितकार्य्यपि ॥६१॥**

...बेमौसमका फूल आदि खाए वा बोलीले दूषित, अत्तोपत्तो नभएको र चित्त दुखाएर दिइएको अन्न खाए पनि द्विजले चान्द्रायण व्रत गर्नू ।

**भूतेभ्योऽन्नमदत्त्वा च तदन्नं गृहिणो दहेत् ॥६२॥**

प्राणीलाई नदिई जुन अन्न खाइन्छ त्यसले गृहस्थलाई जलाउँदछ ।

**हैमराजतकांस्येषु पात्रेष्वद्यात् सदा गृही ।**
**तदभावे साधुगन्धलोध्रद्रुमलतासु च ॥६३॥**

गृहस्थले नित्य सुन, चाँदी वा काँसको भाँडामा खानू । नभए उत्तम बास्नादार लोधवृक्षको पातमा खानू ।

**पलाशपद्मपत्रेषु गृहस्थो भोक्तुमर्हति ।**
**ब्रह्मचारी यतिश्चैव श्रेयो यद्भोक्तुमर्हति ॥६४॥**

गृहस्थले पलाश वा कमलको पातमा पनि खान सक्छ । ब्रह्मचारीले पनि यदि श्रेय चाहने हो भने पलाश वा कमलको पातमा खाना खानू ।

**अभ्युक्ष्यान्नं नमस्कारैर्भुवि दद्याद् बलित्रयम् ।**
**भूपतये भुवः पतये भूतानां पतये तथा ॥६५॥**

नमस्कारका साथमा अन्न माथि जल छर्की 'ॐ भूपतये नमः', 'ॐ भुवः पतये नमः' र 'ॐ भूतानां पतये नमः' भन्दै जमिनमा तीन बलि दिनू ।

**अपः प्राश्य ततः पश्चात् पञ्चप्राणाहुतीः क्रमात् ।**
**स्वाहाकारेण जुहुयाच्छेषमद्याद्यथासुखम् ॥६६॥**

त्यसपछि आचमन गरी क्रमैले पाँच प्राणाहुति (ॐ प्राणाय स्वाहा, ॐ अपानाय स्वाहा, ॐ उदानाय स्वाहा, ॐ समानाय स्वाहा र ॐ व्यानाय स्वाहा) भनी दिनू र बाँकी अन्न सुखपूर्वक आफैं खानू ।

**अनन्यचित्तो भुञ्जीत वाग्यतोऽन्नमकुत्सयन् ।**
**आतृप्तेरन्नमश्नीयादक्षुण्णं पात्रमुत्सृजेत् ॥६७॥**

एकाग्रमनले, चुपचाप भई, अन्नको निन्दा नगरिकन खानू । नअघाउन्जेल खानू तर भाँडो रित्तो पारेर नछोड्नू ।

**उच्छिष्टमन्नमुद्धृत्य ग्रासमेकं भुवि क्षिपेत् ।**
**आचान्तः साधुसङ्गेन सद्विद्यापठनेन च ॥६८॥**

जुठो अन्न उठाई त्यसमध्ये एक गाँस जमिनमा राखिदिनू । आचमन गरी सज्जनका साथ उत्तम विद्या पढ्दै ..।

**वृत्तवृद्धकथाभिश्च शेषाहमतिवाहयेत् ।**
**सायं सन्ध्यामुपासीत हुत्वाऽग्निं भृत्यसंयुतः ॥६९॥**

...वृद्धजनका बितेका कुराका कथा सुन्दै बाँकी दिन बिताउनू ।
साँझमा सपरिवारले अग्निमा होमगरी सन्ध्योपासना गर्नू ।

**आपोशानक्रियापूर्वमश्नईीदन्वहं द्विजः ।**
**सायमप्यतिथिः पूज्यो होमकालागतोऽनिशम् ॥७०॥**

द्विजले दिनहुँ पहिले आपोऽशानक्रिया (पानीले हातमुख धुने र आचमन गर्ने काम) गरेर अनि मात्र खाना खानू । साँझमा होमको बेला आउने अतिथि पनि...।

**श्रद्धया शक्तितो नित्यं श्रुतं हन्यादपूजितः ।**
**नातितृप्त उपस्पृश्य प्रक्षाल्य चरणौ शुचिः ॥७१॥**

..श्रद्धा र शक्ति अनुसार नित्य पूजनीय हुन्छन् । अपूजित अतिथिले गृहस्थको शास्त्र नष्ट पारिदिन्छन् । पेटभरी नखाई, हातमुख सफा पारी, गोडा धोएर पवित्र भई..।

**अप्रत्यगुत्तरशिराः शयीत शयने शुभे ।**
**शक्तिमानुचिते काले स्नानं सन्ध्यां न हापयेत् ॥७२॥**

..टाउको पश्चिम र उत्तरतिर नपारी सुत्नू । शुभ ओछ्यानमा सुत्नू ।
समर्थले उचित समयको स्नान र सन्ध्यावन्धन नत्याग्नू ।

ब्राह्मे मुहूर्त्ते चोत्थाय चिन्तयेद्धितमात्मनः ।
शक्तिमान् मतिमान् नित्यं व्रतमेतत् समाचरेत् ॥७३॥

ब्रह्ममुहूर्तमा उठेर स्वहित चिन्तन गर्नू । शक्तिमान् र बुद्धिमान् गृहस्थले यी व्रत सधैं गर्नू ।

॥ इति श्रीवेदव्यासीये धर्मशास्त्रे गृहस्थाह्निकोऽनाम तृतीयोऽध्यायः ॥३॥



मोहन प्रसाद सापकोटाद्वारा नेपाली भाषामा गरिएको व्याससमृतिको
तेश्रो अध्यायको भावानुवाद समाप्त भयो ।



आदितः श्लोकानां समष्टयङ्काः-९८+७३=१७१
शुरुदेखिको श्लोकसङ्ख्या : १७१



॥ अथ चतुर्थोऽध्यायः ॥
(चौथो अध्याय)
॥ अथ गृहस्थाश्रमप्रशंसापूर्वकतीर्थधर्मवर्णनम् ॥
(गृहस्थाश्रमाको प्रशंसा र तीर्थधर्म)

इति व्यासकृतं शास्त्रं धर्मसारसमुच्चयम् ।
आश्रमे यानि पुण्यानि मोक्षधर्माश्रितानि च ॥१॥

यो व्यासले रचना गरेको धर्मशास्त्रको सार-सङ्ग्रह हो । विभिन्न वर्णाश्रममा गर्नहुने जेजस्ता कर्म छन् ती र मोक्षधर्मका लागि गर्नुपर्ने जेजस्ता पुण्यकर्म छन् (ती सबै यसमा बताइएका छन्) ।

गृहाश्रमात् परो धर्मो नास्ति नास्ति पुनः पुनः ।
सर्वतीर्थफलं तस्य यथोक्तं यस्तु पालयेत् ॥२॥

यो कुरा पटक पटक भन्न सकिन्छ कि गृहस्थ आश्रम भन्दा ठूलो कुनै धर्म छैन । जो मानिस यो आश्रम यथोक्त रुपले पालना गर्दछ उसलाई सबै तीर्थको फल प्राप्त हुन्छ ।

गुरुभक्तो भृत्यपोषी दयावाननसूयकः ।
नित्यजापी च होमी च सत्यवादी जितेन्द्रियः ॥३॥

स्वदारे यस्य सन्तोषः परदारनिवर्तनम् ।
अपवादोऽपि नो यस्य तस्य तीर्थफलं गृहे ॥४॥

ठूलालाई आदर गर्ने, आफूमा आश्रित जनलाई पालनपोषण गर्ने, दयालु, आन्हिस नगर्ने, नित्य गायत्री जप गर्ने, होम गर्ने, साँचो बोल्ने, जितेन्द्रिय, आफ्नै पत्नीमा सन्तुष्ट भई परस्त्रीबाट टाढा रहने र कुनै पनि बदनामीबाट जोगिनेलाई घरमै बसेर तीर्थको फल मिल्दछ ।

परदारान् परद्रव्यं हरते योदिने दिने ।
सर्व्वतीर्थाभिषेकेण पापं तस्य न नश्यति ॥५॥

जसले दिन प्रतिदिन परायास्त्री र परायाधन हरण (वा भोग) गर्दछ उसको त्यो पाप सबै तीर्थमा नुहाएर पनि नष्ट हुँदैन ।

गृहेषु सवनीयेषु सर्वतीर्थफलं ततः ।
अन्नदस्य त्रयो भागाः कर्ता भागेन लिप्यते ॥६॥

सोमको सवन वा यज्ञकर्मसँग सम्बन्धित कर्म हुने घरमा सबै तीर्थको फल मिल्दछ, अन्नदातालाई फलको तीन र कर्म गर्नेलाई एक भाग मिल्दछ ।

प्रतिश्रयं पादशौचं ब्राह्मणानाञ्च तर्पणम् ।
न पापं संस्पृशेत्तस्य बलिं भिक्षां ददाति यः ॥७॥

जसले ब्राह्मणलाई आश्रय दिन्छ, उसको गोडा धुन्छ, खाना खुवाई तृप्त पार्दछ वा बलि वा भिक्षा दिन्छ उसलाई पापले छुनै सक्दैन ।

पादोदकं पादधृतं दीपमन्नं प्रतिश्रयम् ।
यो ददाति ब्राह्मणेभ्यो नोपसर्पति तं यमः ॥८॥

जसले ब्राह्मणको गोडा धुन जल, लगाउन खराऊ दिन्छ, तिनको आरती गर्दछ, खान अन्न र बस्न वास दिन्छ उसका नजिक यमराज आउँदैनन् ।

विप्रपादोदकक्लिन्ना यावत्तिष्ठति मेदिनी ।
तावत् पुष्करपात्रेषु पिबन्ति पितरोऽमृतम् ॥९॥

जबसम्म पृथ्वी ब्राह्मणको गोडा धोएको जलले भिजिरहन्छ तबसम्म धोईदिनेका पितृहरु कमलको पातको दुनामा अमृत पिइरहन्छन् ।

**यत्फलं कपिलादाने कार्तिक्यां ज्येष्ठपुष्करे ।**
**तत्फलं ऋषयः श्रेष्ठा विप्राणां पादशौचने ॥१०॥**

कार्तिक पूर्णिमामा ज्येष्ठपुष्कर तीर्थमा कैली गाई दान गर्नाले पाइने फल हे श्रेष्ठ ऋषिहरु हो ! ब्राह्मणको गोडा धुनाले नै मिल्दछ ।

**स्वागतेनाग्नयः प्रीता आसनेन शतक्रतुः ।**
**पितरः पादशौचेन अन्नाद्येन प्रजापतिः ॥११॥**

ब्राह्मणको स्वागतले अग्नि, बस्न आसन दिनाले इन्द्र, पाउ धुनाले पितृ र खान दिनाले प्रजापति प्रसन्न हुन्छन् ।

**मातापित्रोः परं तीर्थं गङ्गा गावो विशेषतः ।**
**ब्राह्मणात् परमं तीर्थं न भूतं न भविष्यति ॥१२॥**

मातापिताभन्दा गङ्गा र विशेष गरी गाई ठूला तीर्थ हुन् तर ब्राह्मणभन्दा ठूला तीर्थ न कहिल्यै भए न कहिल्यै हुनेछन् ।

**इन्द्रियाणि वशीकृत्य गृह एव वसेन्नरः ।**
**तत्र तस्य कुरुक्षेत्रं नैमिषं पुष्कराणि च ॥१३॥**

मनुष्य इन्द्रियलाई वशमा गरी आफ्नो घरमै बस्नु, त्यही नै उसको कुरुक्षेत्र, नैमिष र पुष्कर आदि तीर्थ हो ।

**गङ्गाद्वारञ्च केदारं सन्निहती तथैव च ।**
**एतानि सर्वतीर्थानि कृत्वा पापैः प्रमुच्यते ॥१४॥**

तथा त्यहाँ हरिद्वार, केदारनाथ र कुरुक्षेत्र तीर्थ हुन्छन् । यी सबै तीर्थहरुलाई घरमै समेटेर उ सबै पापबाट मुक्त हुन्छ ।

**वर्णानामाश्रमाणाञ्च चातुर्वर्णस्य भो द्विजाः ।**
**दानधर्मं प्रवक्ष्यामि यथा व्यासेन भाषितम् ॥१५॥**

हे द्विजगण ! वर्ण, आश्रम र चतुवर्णसम्बन्धी दानधर्मका कुरा म त्यसै गरी वर्णन गर्दछु, जस्तो व्यासले वर्णन गर्नु भएको थियो ।

**यद्ददाति विशिष्टेभ्यो यच्चाश्नाति दिने दिने ।**
**तच्च वित्तमहं मन्ये शेषं कस्याभिरक्षति ॥१६॥**

मानिस जुन धनलाई श्रेष्ठ जनलाई दानमा दिन्छ र जुन धनलाई नित्य आफैं भोग गर्दछ म त्यसैलाई धन मान्दछु । अरु धन कसका लागि जोगाई राखिएको हो म बुझ्दिन ।

**यद्ददाति यदश्नाति तदेव धनिनो धनम् ।**
**अन्ये मृतस्य क्रीडन्ति दारैरपि धनैरपि ॥१७॥**

जुन दान गरिन्छ र भोगिन्छ त्यो नै धनीको धन हो । मरेपछि त अरुहरु नै उसको धन र पत्नीमाथि खेलबाड गर्दछन् ।

**किं धनेन करिष्यन्ति देहिनोऽपि गतायुषः ।**
**यद्वर्द्धयीतुमिच्छन्तस्तच्छरीरमशाश्वतम् ॥१८॥**

उमेर बितेका मानिस पनि धनले के पो गर्दछन् र ! धन बढाउन चाहने यो शरीर पनि सधैंका लागि रहने होइन क्यारे ! ।

**अशाश्वतानि गात्राणि विभवो नैव शाश्वतः ।**
**नित्यं सन्निहितो मृत्युः कर्तव्यो धर्मसंग्रहः ॥१९॥**

शरीर सधैं रहि रहँदैन, धन पनि सधैं रहने वस्तु होइन । तर काल सधैं आसपासमै रहिरहन्छ, यसैले बरु धर्मको जोरजम्मा गर्नू ।

**यदि नाम न धर्माय न कामाय न कीर्तये ।**
**यत्परित्यज्य गन्तव्यं तद्धनं किं न दद्दीते ॥२०॥**

धनले धर्म पनि कमाएन, आवश्यकता पनि पूरा गरेन र यश पनि बढाएन तर पनि यसलाई यहीँ छाडेर जानुपर्ने हुन्छ भने धन-दान किन गर्दिनै ? ।

**जीवन्ति जीविते यस्य विप्रा मित्राणि बान्धवाः ।**
**जीवितं सफलं तस्य आत्मार्थे को न जीवति ॥२१॥**

जो बाँच्नाले ब्राह्मण, मित्र र आफन्त बाँचेका हुन्छन्, उसको जीवन पो सफल जीवन, आफ्नै लागि त को पो बाँच्दैन र ? ।

**पशवोऽपि हि जीवन्ति केवलात्मोदरम्भराः ।**
**किं कायेन सुगुप्तेन बलिना चिरजीविना ॥२२॥**

केवल आफ्नो पेट भर्न भनेर त पशु पनि बाँचेकै छन्, त्यसैले राम्ररी रक्षित, बलियो र लामो समयसम्म बाँच्ने शरीरको पनि के काम ? ।

**ग्रासादर्धमपि ग्रासमर्थिभ्यः किं न दीयते ।**
**इच्छानुरूपो विभवः कदा कस्य भविष्यति ॥२३॥**

एक गाँसको आधा भएपनि किन आवश्यकता पर्नेलाई दिइँदैन ? मनले सोचे जस्तो समृद्धि कहिले कसले पो पाएको हुन्छ र ? ।

**अदाता पुरुषस्त्यागी धनं संत्यज्य गच्छति ।**
**दातारं कृपणं मन्ये मृतोऽप्यर्थं न मुञ्चति ॥२४॥**

दान नगर्ने पुरुष त्यागी हो किन भने उसले यस संसारमै सबै धन छोडेर जान्छ । म त दान दिनेलाई पो कञ्जूष मान्दछु किनकि उ त मरेर पनि त्यो धनलाई छोड्दैन ।

**प्राणनाशस्तु कर्तव्यो यः कृतार्थो न सो मृतः ।**
**अकृतार्थस्तु यो मृत्युं प्राप्तः खरसमो हि सः ॥२५॥**

प्राण त सबैले छोड्नु नै पर्दछ परन्तु जो दान आदि गरी कृतार्थ भएका हुन्छन् ती मर्दैनन् तर जो कृतार्थ नभई मर्न पुग्छन् ती गधासमान हुन्छन् ।

**अनाहूतेषु यद्दत्तं यच्च दत्तमयाचितम् ।**

**भविष्यति युगस्यान्तस्तस्यान्तो न भविष्यति ॥२६॥**

जुन दान नबोलाईकन दिइन्छ वा जुन दान नमागी दिइन्छ, युगको
अन्त त हुन्छ तर त्यो दानको अन्त हुँदैन ।

**मृतवत्सा यथा गौश्च तृष्णालोभेन दुह्यते ।**
**परस्परस्य दानानि लोकयात्रा न धर्मतः ॥२७॥**

जसरी बाछो मरेको गाई पनि तृष्णा र लोभले दुहिन्छ त्यसरी नै एक आपसमा
गरिने दान संसार चलाउन हुन्छ धर्मका लागि हुँदैन ।

**अदृष्टे चाशुभे दानं भोक्ता चैव न दृश्यते ।**
**पुनरागमनं नास्ति तत्र दानमनन्तकम् ॥२८॥**

अशुभ हटाउने उद्देश्य नराखी गरिने तथा भोक्ता नदेखिने (फलको इच्छा नराखी) दान
कहिल्यै नासिदैन र दाताको संसारमा पुनरागमन हुँदैन ।

**मातापितृषु यद्दद्याद् भ्रातृषु श्वशुरेषु च ।**
**जायापत्येषु यद्दद्यात् सोऽनन्तः स्वर्गसंक्रमः ॥२९॥**

जुन दान आमाबाबु, दाजुभाई, ससुरा, पत्नी वा सन्तानलाई दिइन्छ त्यो स्वर्गको साधन हुन्छ ।

**पितुः शतगुणं दानं सहस्रं मातुरुच्यते ।**
**भगिन्यां शतसाहस्रं सोदरे दत्तमक्षयम् ॥३०॥**

पितालाई दिइएको सय, मातालाई दिइएको हजार, बहिनीलाई दिइएको लाख गुना र
दाजुभाईलाई दिइएको दान अक्षय फल दिने हुन्छ ।

**अहन्यहनि दातव्यं ब्राह्मणेभ्यो मुनीश्वराः ।**
**आगमिष्यति यत् पात्रं तत्पात्रं तारयीष्यति ॥३१॥**

हे मुनिजन ! ब्राह्मणलाई प्रतिदिन दिने गर्नू । कुनै दिन सत्पात्र
आउला र त्यसले संसारबाट तारिदेला ।

**किञ्चिद्वेदमयं पात्रं किञ्चित् पात्रं तपोमयम् ।**
**पात्राणामुत्तमं पात्रं शूद्रान्नं यस्य नोदरे ॥३२॥**

कोही पात्र वेद ज्ञानी हुन्छन् त कोही तपस्वी । पात्रमध्ये उत्तम पात्र त्यो हुन्छ जसको पेटमा शूद्रको अन्न परेको हुँदैन ।

**यस्य चैव गृहे मूर्खो दूरे चापि गुणान्वितः ।**
**गुणान्विताय दातव्यं नास्ति मूर्खे व्यतिक्रमः ॥३३॥**

जसका घरैमा मूर्ख ब्राह्मण छन् र गुणी (ब्राह्मण) घरबाट टाढा छन् भने उसले गुणीलाई नै दिनू । मूर्खलाई नदिँदा धर्मको उल्लङ्घन हुँदैन ।

**देवद्रव्यविनाशेन ब्रह्मस्वहरणेन च ।**
**कुलान्यकुलतां यान्ति ब्राह्मणातिक्रमेण च ॥३४॥**

देवस्व नास्नाले, ब्रह्मस्व खोस्नाले र ब्राह्मणलाई तिरस्कार गर्नाले (उत्तम) कुल पनि दुष्ट कुल हुन जान्छ ।

**ब्राह्मणातिक्रमो नास्ति विप्रे वेदविवर्जिते ।**
**ज्वलन्तमग्निमुत्सृज्य न हि भस्मनि हूयते ॥३५॥**

वेदहीन ब्राह्मणको तिरस्कारले ब्राह्मण-उल्लङ्घन हुँदैन किन कि बलेको आगोलाई छोडी खरानीमा होम हालिँदैन ।

**सन्निकृष्टमधइीानं ब्राह्मणं यो व्यतिक्रमेत् ।**
**भोजने चैव दाने च हन्यात्त्रिपुरुषं कुलम् ॥३६॥**

भोजन र दानका विषयमा जसले नजिकको वेदपाठी  ब्राह्मणको उल्लङ्घन (वेवास्ता) गर्दछ उसले तीन पुस्तासम्मको आफ्नो कुलको विनाश गर्दछ ।

**यथा काष्ठमयो हस्ती यथा चर्ममयो मृगः ।**
**यश्च विप्रोऽनधइीानस्त्रयस्ते नामधारकाः ॥३७॥**

काठले बनेको हाती, छालाले बनेको मृग र वेद नपढेको
ब्राह्मण-ती तीनै थरी नाममात्रका हुन्छन् ।

**ग्रामस्थानं यथा शून्यं यथा कूपश्च निर्जलः ।**
**यश्च विप्रोऽनधईीनस्त्रयस्ते नामधारकाः ॥३८॥**

मानिस नभएको गाऊँठाऊँ, पानी नभएको कुवा र वेद नपढ्ने
ब्राह्मण-ती तीनै कुरा नाममात्रका हुन्छन् ।

**ब्राह्मणेषु च यद्दत्तं यच्च वैश्वानरे हुतम् ।**
**तद्धनं धनमाख्यातं धनं शेषं निरर्थकम् ॥३९॥**

जुन धन ब्राह्मणलाई दानमा दिइन्छ वा जुन धनले आगोमा होम गरिन्छ त्यो
धनलाई नै धन भनिएको छ, बाँकी धन त निरर्थक हो ।

**समब्राह्मणे दानं द्विगुणं ब्राह्मणब्रुवे ।**
**सहस्रगुणमाचार्ये ह्यनन्तं वेदपारगे ॥४०॥**

अब्राह्मणलाई दिँदा बराबर, नाम मात्रको ब्राह्मणलाई दिँदा दोबर, आचार्यलाई दिँदा
हजार गुना र वेदपारङ्गत ब्राह्मणलाई दान दिँदा अनन्त फल पाइन्छ ।

**ब्रह्मबीजसमुत्पन्नो मन्त्रसंस्कारवर्जितः ।**
**जातिमात्रोपजीवी च स भवेद् ब्राह्मणः समः ॥४१॥**

ब्राह्मणको बिजले उत्पन्न भएको तर मन्त्र र संस्कारले हीन भई जातका
कारणले मात्र जीवन चलाउँछ भने त्यो समब्राह्मण हो ।

**गर्भाधानादिभिर्मन्त्रैर्वेदोपनयनेन च ।**
**नाध्यापयति नाधीते स भवेद् ब्राह्मणब्रुवः ॥४२॥**

मन्त्रसहित गर्भाधान आदि तथा वेद पढ्न गुरु कहाँ लगेर संस्कार गरिएको
भएर पनि वेद नपढ्ने र नपढाउने ब्राह्मण ब्राह्मणब्रुव हुन्छ ।

**अग्निहोत्री तपस्वी च वेदमध्यापयेच्च यः ।**
**सकल्पं सरहस्यञ्च तमाचार्यं प्रचक्षते ॥४३॥**

जो अग्निहोत्री छ, तपस्वी छ तथा जसले कल्प र आरण्यक उपनिषद्
आदि रहस्य सहित वेद पढाउँदछ उसलाई आचार्य भनिन्छ ।

**इष्टिभिः पशुबन्धैश्च चातुर्मास्यैस्तथैव च ।**
**अग्निष्टोमादिभिर्यज्ञैर्येन चेष्टं स इष्टवान् ॥४४॥**

पशुबन्ध तथा चातुर्मास्य आदि इष्टिले तथा अग्निष्टोम आदि यज्ञले
जसले हवन गरेको छ उसलाई इष्टवान भनिन्छ ।

**मीमांसते च यो वेदान् षड्भिरङ्गैः सविस्तरैः ।**
**इतिहासपुराणानि स भवेद्वेदपारगः ॥४५॥**

जसले छ वटै विस्तृत अङ्ग सहित वेदको तथा इतिहास एवं पुराणको गहन
अध्ययन गर्दछ ऊ वेदपारग हुन्छ ।

**ब्राह्मणा येन जीवन्ति नान्यो वर्णः कथञ्चन ।**
**ईदृक्पथमुपस्थाय कोऽन्यस्तं त्यक्तुमुत्सहेत् ॥४६॥**

ब्राह्मणले जे कार्य गरी जीवन चलाउँदछ अरुले त्यो कार्य गरेर
कहिल्यै जीवन नचलाउनू । यस्तो बाटो अपनाएर फेरी छोड्न को चाहला र ! ।

**ब्राह्मणः स भवेच्चैव देवानामपि दैवतम् ।**
**प्रत्यक्षञ्चैव लोकस्य ब्रह्मतेजो हि कारणम् ॥४७॥**

यस्तो ब्राह्मण देवताका पनि देवता हुन पुग्दछ । ब्रह्मतेज नै लोकको प्रत्यक्ष कारण हो ।

**ब्राह्मणस्य मुखं क्षेत्रं निष्कर्करमकण्टकम् ।**
**वापयेत्तत्र बीजानि सा कृषिः सार्वकामिकी ॥४८॥**

ब्राह्मणको मुख भनेको गेगर र काँडा नभएको खेत हो । मानवले यसमा नै
बीऊ रोप्नू । यो खेती नै सबै कामना पूरा गर्ने खेती हो ।

**सुक्षत्रे वापयेद्बीजं सुपात्रे दापयेद्धनम् ।**
**सुक्षेत्रे च सुपात्रे च क्षिप्तं नैव विदुष्यति ॥४९॥**

उत्तम खेतमा बीऊ रोप्नू । सुपात्रलाई धन दिनू । उत्तम खेतमा रोपिएको बीऊ र सुपात्रलाई दिइएको धन कहिल्यै खेर जाँदैन ।

**विद्याविनयसम्पन्ने ब्राह्मणे गृहमागते ।**
**क्रीडन्त्योषधयः सर्वा यास्यामः परमां गतिम् ॥५०॥**

विद्या-विनयले सम्पन्न ब्राह्मण घरमा आउँदा औषधीहरु (अन्न) मोक्ष हुने भयौं भनी नाच्दछन् ।

**नष्टशौचे व्रतभ्रष्टे विप्रे वेदविवर्जिते ।**
**दद्दीमानं रुदत्यन्नं भयाद्वै दुष्कृतं कृतम् ॥५१॥**

अपवित्रत र व्रतभ्रष्ट तथा वेदहीन ब्राह्मणलाई दिइन लागिएको अन्न दुष्कर्म हुन लाग्यो भनी डराई रुन्छन् ।

**वेदपूर्णमुखं विप्रं सुभुक्तमपि भोजयेत् ।**
**न च मूर्खं निराहारं षड्रात्रमुपवासिनम् ॥५२॥**

वेदले पूर्ण ब्राह्मणलाई अघाएको भएपनि खुवाउनू तर मूर्ख ब्राह्मणलाई छ रातको भोको भएपनि नखुवाउनू ।

**यानि यस्य पवित्राणि कुक्षौ तिष्ठन्ति भो द्विजाः ।**
**तानि तस्य प्रयोज्यानि न शरीराणि देहिनाम् ॥५३॥**

मानिसले, जेजस्ता पवित्र कुरा ब्राह्मणको पेट अनुकूल हुन्छ त्यही कुरा दिनू नत्र शरीरधारीको कुनै प्रयोजन छैन ।

**यस्य गेहे सदाऽश्नन्ति हव्यानि त्रिदिवौकसः ।**
**कव्यानि चैव पितरः किम्भूतमधिकं ततः ॥५४॥**

जुन ब्राह्मणको घरमा देवता हव्य र पितृ कव्य खान्छन् त्यो
ब्राह्मणभन्दा ठूलो कुन प्राणी होला र ! ।

**यद्भुङ्क्ते वेदविद्विप्रः स्वकर्मनिरतः शुचिः ।**
**दातुः फलमसङ्ख्यातं प्रतिजन्म तदक्षयम् ॥५५॥**

(दाताको) जुन अन्न आफ्नो कर्ममा लीन, पवित्र र वेदविद ब्राह्मणले खान्छ (दातालाई) त्यसको
फल अगण्य हुन्छ र त्यो प्रत्येक जन्ममा अक्षय रहन्छ ।

**हस्त्यश्वरथयानानि केचिदिच्छन्ति पण्डिताः ।**
**अहं नेच्छामि मुनयः कस्यैताः सर्वसम्पदः ॥५६॥**

कोही पण्डित हाती, घोडा, रथ र यान आदिको कामना गर्दछन् । हे मुनिजन ! म
यो जान्दिन ति सम्पदा कसका हुन् ? (अर्थात् कसैका होइनन्) ।

**वेदलाङ्गलकृष्टेषु द्विजश्रेष्ठेषु सत्सु च ।**
**यत्पुरा पातितं बीजं तस्यैताः सस्यसम्पदः ॥५७॥**

परापूर्वकालमा वेदरुपी हलोले जोती ब्राह्मण र सज्जनमा जुन बीऊ रोपियो
यी अन्न-सम्पदा त्यही बीऊबाट उत्पन्न भएका हुन् ।

**शतेषु जायते शूरः सहस्रेषु च पण्डितः ।**
**वक्ता शतसहस्रेषु दाता भवति वा न वा ॥५८॥**

सैयौंमा एक वीर जन्मन्छ । हजारौंमा एक विद्वान जन्मन्छ । लाखौंमा कुनै एक
वक्ता जन्मन्छ । दाता चाँहि जन्मन्छ कि जन्मँदैन यसै भन्नै सकिन्न ।

**न रणे विजयाच्छूरोऽध्ययनान्न च पण्डितः ।**
**न वक्ता वाक्पटुत्वेन न दाता चार्थदानतः ॥५९॥**

लडाईं जित्दैमा वीर, शास्त्र पढ्दैमा विद्वान, वाक्पटुता हुँदैमा वक्ता
तथा धन दान गर्दैमा कोही दाता हुँदैन ।

इन्द्रियाणां जये शूरो धर्मं चरित पण्डितः ।
हितप्रियोक्तिभिर्वक्ता दाता सम्मानदानतः ॥६०॥

इन्द्रियलाई जिते मानिस वीर हुन्छ, धर्माचरण गरे विद्वान हुन्छ, हितकर र प्रिय वचनले वक्ता हुन्छ तथा अरुलाई सम्मान दिए दाता हुन्छ ।

यद्येकपङ्क्त्यां विषमं ददाति स्नेहाद्भयाद्वा यदि वार्थहेतोः ।
वेदेषु दृष्टं ऋषिभिश्च गीतम् तद् ब्रह्महत्यां मुनयो वदन्ति ॥६१॥

मायाले, डरले वा धनका कारणले एउटै हारमा बसेर खाइरहेका ब्राह्मणलाई असमान व्यवहार गर्नुलाई मुनिहरु ब्रह्महत्या भन्दछन् । यही कुरा वेदमा देखिएको छ र ऋषिहरुले पनि बताएका छन् ।

उषरे वापितं वीजं भिन्नभाण्डेषु गोदुहम् ।
हुतं भस्मनि हव्यञ्च मूर्खे दानमशाश्वतम् ॥६२॥

बाँझोमा रोपिएको वीऊ, चुहुने भाँडोमा दोहिएको दूध, खरानीमा हालिएको होम र मूर्खलाई दिइएको दान नाशवान् हुन्छ ।

मृतसूतकपुष्टाङ्गो द्विजः शूद्रान्नभोजने ।
अहमेवं न जानामि कां योनिं स गमिष्यति ॥६३॥

मृतक र सूतकको अन्न खाई आङ लगाउने तथा शूद्रान्न खाने ब्राह्मण कुन योनीमा जन्मन्छ म भन्न सक्दिन ।

शूद्रान्नेनोदरस्थेन यदि कश्चिन्म्रियेत यः ।
स भवेच्छूकरो नूनं तस्य वा जायते कुले ॥६४॥

कुनै मानिस शूद्रको अन्न पेटमा राखी मर्दछ भने ऊ निश्चित रुपमा सुँगुर बन्दछ वा शूद्रकै कुलमा जन्मन्छ ।

गृध्रो द्वादश जन्मानि सप्त जन्मानि शूकरः ।
श्वा चैव सप्त जन्मानि इत्येवं मनुरब्रवीत् ॥६५॥

बाह्र जन्मसम्म गिद्ध, सात जन्मसम्म सुँगुर र सात जन्मसम्म
कुकुर बन्दछ भनी मनुले भनेका छन् ।

**अमृतं ब्राह्मणान्नेन दरिद्रं क्षत्रियस्य च ।**
**वैश्यान्नेन तु शूद्रत्वं शूद्रान्नान्नरकं व्रजेत् ॥६६॥**

ब्राह्मणको अन्नले अमृत (मोक्ष), क्षत्रियको अन्नले दरिद्रता, वैश्यको अन्नले शूद्रता र
शूद्रको अन्नले नरकको प्राप्ति हुन्छ ।

**यश्च भुङ्क्तेऽथ शुद्रान्नं मासमेकं निरन्तरम् ।**
**इह जन्मनि शूद्रत्वं मृतः श्वा चैव जायते ॥६७॥**

जसले एक महिनासम्म लगातार शूद्रको अन्न खान्छ उसले यो जन्ममा
शूद्रत्व प्राप्त गर्दछ र मरेपछि कुकुर हुन्छ ।

**यस्य शूद्रा पचेन्नित्यं शूद्रा वा गृहमेधिनी ।**
**वर्जितः पितृदेवैसत रौरवं याति स द्विजः ॥६८॥**

जसको लागि शूद्रा सधैं खाना पकाउँदछे वा शूद्रा जसकी गृहिणी छे त्यस्तो
द्विज पितृ र देवताबाट त्यागिई रौरव नरकमा पर्दछ ।

**भाण्डसङ्करसङ्कीर्णा नानासङ्करसङ्कराः ।**
**योनिसङ्करसङ्कीर्णा निरयं यान्ति मानवाः ॥६९॥**

निचको भाँडामा खाने, निचसँग छुवाछुत जस्ता अनेक कार्य गर्ने र
निचसँग यौन सम्पर्क गर्ने मानिस नरकमा पर्दछ ।

**पङ्क्तिभेदी वृथापाकी नित्यं ब्राह्मणनिन्दकः ।**
**आदेशी वेदविक्रेता पञ्चैते ब्रह्मघातकाः ॥७०॥**

खाना खुवाउन भेदभाव गर्ने, आफूलाई मात्र खाना पकाउने, नित्य ब्राह्मण
निन्दा गर्ने र धन लिई वेद पढाउने-यी पाँच ब्रह्महत्यारा हुन् ।

इदं व्यासमतं नित्यमध्येतव्यं प्रयत्नतः ।
एतदुक्ताचारवतः पतनं नैव विद्यते ॥७१॥

व्यासका यी बिचारलाई प्रयत्नपूर्वक अध्ययन गर्नुपर्दछ । यहाँ बताइएका आचरण गर्नाले मनुष्यको कहिल्यै पतन हुँदैन ।

॥ इति श्रीवेदव्यासइौ धर्मशास्त्रे गृहस्थाश्रमप्रशंसादिवर्णनो नाम चतुर्थोऽध्यायः ॥४॥



मोहन प्रसाद सापकोटाद्वारा नेपाली भाषामा गरिएको व्याससमृतिको
चौथो अध्यायको भावानुवाद समाप्त भयो ।



आदितः श्लोकानां समष्टयङ्काः-१७१+७१=२४२
शुरुदेखिको श्लोकसङ्ख्या : २४२



॥ समाप्ता चेयं व्याससमृतिः ॥
॥ व्याससमृतिको नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥

